रवि शाक्य, इखाछेँ, यल

# नेपालका इतिहास-संशोधकहरुको उत्थान र पतन



लेखक
डा. कमलप्रकाश मल्ल
पूर्व-शिक्षाध्यक्ष
त्रिभुवन विश्वविद्यालय



नेपालसंवत् १११५
नेपाल टेक्ष्ट सोसाइटी
कान्तिपुर

## पृष्ठभूमि

गत २०५३ साल चैत्र २४ गते बिहान **गोरखापत्र**का रचना-शाखाका सम्पादकले मलाई टेलिफोनमा निम्न तीन प्रश्नहरू सोध्नुभएको थियो १. तपाईं अहिले के पढ्दै हुनुहुन्छ ? २. ती पुस्तकहरू किन पढ्दै हुनुहुन्छ ? ३. तपाईको पढाईको समय र बानी के-के हुन् ? यी प्रश्नहरूको जवाफमा मैले टेलिफोनमा ५-७ मिनेट कुरा गरें होला । चैत्र ३० गतेको शनिवारीय परिशिष्टमा मैले टेलिफोनमा गरेको कुराको टिपोटको आधारमा ४५ हरफ जति दुई कलम छापिएको रहेछ । छाप्नु भन्दा अगाडि सो लिखत मैले हेरेको थिइनँ । यसै बीच एकदम अप्रत्याशित रूपमा **देशय् मरुभ्रूया** : (नेपालभाषा साप्ताहिक पत्रिका) को बैशाख १२ र १९, २०५४ अङ्कमा दिनेशराज पन्तको "लिच्छविकालय् छ्यगु संवत्या विषय् न्यंकात:गु भ्रम" शीर्षकमा दुई खण्डमा प्रतिक्रिया निस्के । शायद त्यसैको नेपाली अनुवाद **नेपाल समाचारपत्र**मा (ज्येष्ठ ४, २०५४) पनि निस्केको थाहा पाएँ । त्यो पनि एक मित्रले फोनमा सुनाएपछि मात्र थाहा पाएँ ।

दिनेशराज पन्तको उक्त लेखमा लिच्छविकालमा प्रचलित संवत्का बारेमा मात्र होइन मेरो बारेमा पनि निम्न कुराहरू लेखेका रहेछन् १. आफ्नो निर्णय प्रकाशित नगरीकन प्रचार मात्र गर्न खोजेकोले कमलप्रकाश मल्लको "नियत राम्रो छैन" । २. "अहिलेसम्म कुनै ठोस काम गर्न नसकेको" कमलप्रकाश मल्लले यस्तो काम गर्ने सम्भावना थोरै मात्र छ । ३. इतिहास-संशोधन मण्डललाई तल खसालेर "मूर्खमण्डलीको विद्वच्छिरोमणि" भइरहने इच्छा नै मल्लमा बढी देखिन्छ ।

ममाथि र मेरा श्रद्धेय अग्रज श्रीसत्यमोहन जोशीमाथि समेत दिनेशराज यसरी खनिनु भएको खास कारण बुझ्न गाहारो छैन । हालै २०४६ फाल्गुणमा गोकर्ण वलुवा गाउँमा प्राप्त अंशुवर्माको संवत् ५३६ द्वितीयपौषशुक्ल ५ को अभिलेख पछि प्राचीन नेपालमा दुई थरी संवत् प्रचलित थिए भन्ने सिद्धान्त धराशायी भएको छ । लिच्छविकालमा दुई थरी संवत् चलेका थिए । पहिलो संवत् शक संवत् हो भन्ने निर्णय वास्तवमा पण्डित भगवानलाल इन्द्रजीले आफ्नो लेखको गुजराती भाषाको मौलिकमा सन् १८८० मा नै गरिसकेका थिए । तर सन् १८८४ मा त्यस लेखको अंग्रेजी अनुवाद र सम्पादन गर्ने जियोर्ज व्यूलरको प्रभावमा परी आफ्नो राय परिवर्तन गरी मानदेवदेखि शिवदेव सम्मका अभिलेखमा प्रयोग भएको संवत्लाई विक्रमसंवत् र अंशुवर्मादेखि जयदेव द्वितीयसम्मका अभिलेखलाई सन् ६०६ देखि शुरु भएको हर्षसंवत् भनी निर्क्योल गरेका थिए । विगत ११७ वर्षभित्र "कुण्डकुण्ड पानी मुण्डमुण्ड विचार" भन्ने उखान अनुसार भगवानलाल इन्द्रजीपछि थरीथरी विचार निस्के ।

पण्डित नयराज पन्तले तोत्रराज पाण्डेसँग मिलेर २००४ सालमा वनारसबाट प्रकाशित **नेपालको संक्षिप्त इतिहास** नामक प्रवेशिका परीक्षा निमित्त लेखेको एक पाठ्यपुस्तकमा पहिलो पल्ट **सुमतितन्त्र** नामक एक हस्तलिखित ग्रन्थमा नेपालमा शकसंवत् ४९८ वर्षसम्म चल्यो र त्यसपछि महासामन्त द्वितीय मानदेवले चलाएको "मानदेवसंवत्" ३०० वर्षसम्म चल्छ वा चल्यो भन्ने उल्लेख भए । (पृ. १४) मानदेव प्रथमदेखि

शिवदेव प्रथमसम्म सन् ७८ मा चलेको "शकसंवत्" र अंशुवर्मा पछि (सन् ५७६ मा चलेको) "मानदेवसंवत्" चल्यो भन्ने मत प्रचारमा ल्याए । त्यही मतको कट्टर अनुयायीको रूपमा नयराज तथा इतिहास-संशोधन मण्डलले ५० वर्षसम्म उद्योग गर्दै रहे । प्राचीन सूर्य सिद्धान्तमा आधारित पात्रो बनाउने ग्रन्थ **सुमतितन्त्र**को बारेमा भारतीय विद्वान् काशीप्रसाद जयशवाललाई सूचना दिंदा हेमराज शर्माले सो ग्रन्थ मानदेव प्रथमको पालामा लेखेको हो भन्ने सूचना दिएका थिए । (हेर्नुस् *Chronology and History of Nepal*,1936, pp. 35-36)।

## इतिहास-शिरोमणि आचार्यका थरी-थरी अप्रमाणिक अड्कल

रानीपोखरी संस्कृत पाठशालामा वैयाकरण विष्णुहरि रिमालसँग व्याकरण पढेर वाराणसीमा चन्द्रदेव पाण्डेबाट ज्योतिष तथा शिवकुमार शास्त्रीबाट धर्मशास्त्रमा शास्त्रीसम्म पढेका तर 'पुरातत्त्वका विषयमा शिक्षा नपाएको भएता पनि आफै गरेका अध्ययन र खोजका भरमा (इतिहासको) पुस्तक लेख्न साहस' गर्न पुगेका बाबुराम आचार्यको (**शारदा**, वर्ष ५ अङ्क ११, १९९६ फाल्गुण, पृ. ३३५) लेखैपिच्छे फरक मत प्रतिपादन गर्ने बानी परेको रहेछन् । वहाँको विचारमा कुनै स्थिरता छैन भन्ने कुरा वहाँकै उक्तिले प्रमाणित गर्छ । सन् १९७० अप्रिल २३ विहीवार धनवज्र, चूडामणि बन्धु, तुल्सीराम वैद्य र बासुदेव त्रिपाठीलाई दिनुभएको एक टेप अन्तर्वातामा वहाँको भनाई थियो:

> संवत् ५२८ पुगेको सालमा अंशुवर्माले आफ्नो हातमा प्रशासन लिएका र त्यसपछि व्यवहार सजिलो गर्न निमित्त शतकमा ५ झिकेर केवल २८ आदि संख्या व्यवहार गरेको देखिन्छ । अंशुवर्माले शतस्थानी ५०० अंक छोडेर कोशानुसंव्‌तलाई २९ देखि शुरु गरेका हुन् । यो संक्षिप्त कोशानुसंवत् हो । (धनवज्र वज्राचार्य सं. **बाबुराम आचार्य र वहाँका कृति** । कीर्तिपुर: नेपाल एशियाली अध्ययन संस्थान, २०२९, पृ. २४-२५) ।

सन् १८८८ मा जन्मनु भएका श्री आचार्यज्यूले छयत्तर वर्षको उमेरसम्म इहिहास विषयमा कुनै ग्रन्थ प्रकाश गराउन सक्नुभएको थिएन । (हेर्नुस: **पूर्णिमा** अङ्क २७ : पृ. १४७) । सन् १९२० मा ३२ वर्षको उमेरमा पुरातत्त्व र इतिहासमा रुचि भएपछि प्रकाशित निबन्ध वा ग्रन्थमा प्राथमिक स्रोत र सन्दर्भको उल्लेख र निर्देशन नपाइनु स्वभाविक हो किनभने सन् १९४९ देखि वहाँ निष्पट अन्धा भइसकेका थिए । अरुको सहायता लिनु पर्ने भएकोले अरूसँग र आफूसँग भएका सामग्रीको सदुपयोग गर्न पनि वहाँले सक्नुभएको देखिएन । हालैमात्र प्रकाशित **प्राचीनकालको नेपाल** (रचनाकाल अन्दाजी २०१६-१८) मा आचार्यज्यूले यही संवत्‌लाई **सुमतितन्त्र** अनुरूप 'मानदेवसंव्‌त' नै भएको दावी पृ. १७८-१८२ मा गर्नुभो तर त्यही पुस्तकको पृ. ११०-१११ मा सो संव्‌त "कुनै अज्ञात युगान्तकारी घटनाको स्मरणमा छुट्टै किसिमको 'राष्ट्रिय संवत्'" भनेर लेख्नु भएकोमा अचम्म मान्नुपर्ने कुरा केही छैन ।

खरीदार बाबुराम आचार्यले **शारदा** पत्रिकामा नेपालका "लिच्छवि-राजाहरूको कालगणना" शीर्षकमा आफ्नो लेखमा मानदेव र अंशुवर्माको कालक्रम निर्धारण गर्दा सन् ७८ को शकसंवत् तथा सन् ५७६ को संवत्को आधारमै गरेको भएता पनि खर्दारबाजेले **सुमतितन्त्र**, 'मानदेवसंवत्', वा आफ्नो निर्णयको आधार-प्रमाणको कुनै उल्लेख गरेका थिएन । बरु २००६ भाद्रदेखि २००८ मार्गसम्म आफूले रचना गरेका **नेपालको संक्षिप्त इतिहास**मा खर्दारबाजेले निम्न कुरा लेखेका छन् :

> (रूपवर्मा) पछि यिनको स्थान अंशुवर्माले लिए । यी वृषदेवका वंशका शायद रूपवर्माका छोरा थिए । आफ्नो राज्याभिषेक गराएर शिवदेवको अधिनता छोडे । पछि इ.सं.६०६ देखि एक नया संवत् चलाए । तर रूपवर्माका शासनकालका आरम्भदेखि सन् ५७६ यसको उठान माने । (**पूर्णिमा**, अङ्क ४७, पृष्ठ -८)

**गोरखापत्र**मा मेरो अन्तरवार्ता छापेपछि दिनेशराज पन्तको **गोरखापत्र**मा (वैशाख १४, २०५४ पत्र ग) "लिच्छविकालमा चलेका संवत्हरू" शीर्षकको एक लेख निस्क्यो । त्यस लेखमा वहाँले अरू कुरा बाहेक निम्न कुरा पनि लेख्नुभएको रहेछ:

> ऐतिहासिक शिरोमणि बाबुराम आचार्यको वि.सं. १९९६ मा **शारदा** पत्रिकामा छापिएको लिच्छवि कालगणना सम्बन्धी आफ्नो लेखमा र तोत्रराज पाण्डे र नयराज पन्तद्वारा वि.सं. २००४ मा प्रकाशित **नेपालको संक्षित इतिहास** नामक पुस्तकमा **सुमतितन्त्र**मा वर्णित दुई संवत्लाई लिएपछि यसको बढी प्रचार भयो । (**गोरखापत्र**, बैशाख १४, २०५४, पृष्ठ ग) ।

यो इतिहासलाई बङ्ग्याउने दुष्प्रयास मात्र हो ।

## संशोधन-मण्डलको उत्थान र पतन

नयराज पन्त, वहाँका सुपुत्र र वरिष्ठ चेलाहरूले नेपालको बौद्धिक जीवनमा छिद्रान्वेषण, गालिगलौज, व्यक्ति र संस्थाको मानमर्दन, नेपाल संवत्माथि र नेवार बुद्धिजीवीहरूलाई छानीछानी निरन्तर प्रहार हुन थालेपछि सन् १९८४ देखि मैले यिनीहरूसँग मोर्चा कस्ने निर्णय गर्दै आएका थिएँ । इतिहास संशोधन-मण्डल भन्ने गुरुकुललाई मैले धराशायी बनाउनु परेको छैन । सो संस्था अहिले कुन रसातल वा रछ्यानमा परिरहेको छ भन्ने कुरा पूर्व-सदस्य शङ्करमान राजवंशीका कृतिहरू वा उहाँका पुत्रका पुस्तक तथा वेलाबखत दिनेशराजलाई लेखेको पत्रले स्पष्ट पार्दछ । जुन संस्था धरायसी भइसक्यो उसलाई कोर्रा हानेर के फाइदा ? त्यसैले संशोधन-मण्डललाई गिराउने मेरो नियतमाथि दिनेशराजले शंका गुर्न पर्दैन । स्वयंम् उहाँकै पूज्य पिताज्यूको ओजस्वी लेखनीबाट निस्केको शब्द-कमल पढौं:

संशोधन-मण्डल अङ्गभङ्ग भइसकेकोले त्यताबाट पनि यति ठूलो काममा (लिच्छवि कालक्रम निर्णय) म सहायता पाउन सक्तिन ।" (**लिच्छविसंवत्को निर्णय**, पृ.५०) संशोधन-मण्डल दुब्लाउँदै गएको स्पष्ट देखिन्छ । यताबाट यसलाई रोग लागेको छ भन्ने स्पष्ट हुन्छ । सो रोगको निदान पनि पत्ता लागेको छ । तर उपचार गर्न सकिएको छैन । (पृ. २३)

आशा गरौं रोगको उचित उपचार गरेर मण्डले इतिहासकारहरूले फेरि नेपालमा अर्को "बौद्धिक आन्दोलन" शुरु गर्न सकोस् ।

## पं. नयराजको इतिहास-प्रवेश

आफ्नो मातामहत भुवननाथ पाण्डेबाट पूजाकोठा र भान्छाकोठामा ५ वर्षको उमेरदेखि इतिहासको गफ सुनेर पछि टेवाहालको जीवरत्न गुभाजुबाट पाएको प्राचीन लिपि-तालिकाबाट लिपि-ज्ञान हासिल गरेपछि सिसिल वेण्डलको *A Journey of Historical and Archaeological Research in Nepal and Northern India,* Cambridge 1886 र भगवानलाल इन्द्रजीको *Twenty-Three Inscriptions from Nepal* 1885 देखेपछि इतिहास प्रवेश गर्न प्रेरणा प्राप्त भएका पण्डित नयराजले सिद्धान्त ज्योतिष पढेर केही गर्न नसकेर निराश भएपछि यस क्षेत्रमा लागेका थिए । (हेनुर्स नयराज पन्त, 'उपोद्‌धात' **इतिहास-संशोधनको प्रमाण-प्रमेय** भाग १, पृ १-५० र "नेपालको इतिहासमा मेरो प्रवेश" 'उपोद्‌धात' **लिच्छवित्रिबसंवत्को निर्णय**-पृ. ६-७) । संस्कृत भाषा, गणित र ज्योतिष पढ्न आएका आफ्ना "अधकल्चा विद्यार्थीहरूलाई" भेला गरेर "क्षणिक उत्साहको भरमा" उहाँले शुरु गर्नु भएको "बौद्धिक क्रान्ति" कसरी र कुन उद्देश्यले प्रेरित भयो भन्ने कुरा उहाँकै भूमिकाबाट छर्लङ्ग हुन्छ । उहाँकै शब्दमा भन्ने हो भने

> इतिहास संशोधनहरूको विषयमा दोष कसरी टिप्ने, शुद्ध निर्णय कसरी दिने विषयमा मलाई निकै परिश्रमपूर्वक विचार गर्नुपऱ्यो । यसमा विचार गर्दा भास्करले देखाइएको बाटोलाई नै मैले उचित सम्झें । (उही, पृ. ३०) (भास्करको अनुसार) स्पष्ट उपपत्ति भन्नु -जस्ताको तस्तो कुरो ठीक ठीक जाँची भन्नु - कर्त्तव्य हुन आएकोले र दोष नदेखाई पुरानो कुरामा विश्वास गर्नेहरूले एकदम नपत्याइदिने हुनाले पनि मैले पुरानो कुराको खण्डन अहिले गर्नुपऱ्यो (उही पृ ३७-३८) ।

इतिहास अध्ययनमा आधुनिक तुलनात्मक र आलोचनात्मक अनुसन्धान प्रविधिको कुनै औपचारिक शिक्षा प्राप्त नगरिकनै मातामहको कोठे गफबाट पाएको प्रेरणाको भरमा इतिहास प्रवेश गर्न पुगेका पण्डित नयराज पन्तका शुरुका २१ जना संस्कृत, गणित तथा ज्योतिष पढ्न आएका चेलाहरूमध्ये २०१३ सम्ममा ८ बचेका थिए । ती मध्ये पनि के कति जनालाई 'दीक्षित स्नातक र परिपक्व इतिहासकार'

बनाए भन्न सजिलो छैन । किनभने उहाँको गुरुकुलको लिपिवद्ध पाठ्यक्रम पनि छैन र स्नातकको पञ्जिका पनि केही देखिएन । हालै एक पुस्तकसूची पनि प्रकाशित भए । त्यसमा इतिहासका बासी ५/६ ग्रन्थ बाहेक केही भेट्टिएको छैन ।

विद्याको सर्वत्र पूजा हुन्छ भन्ने आदर्श अनुरूप जहाँ पण्डित नयराज पन्त, उहाँका पुत्रहरू तथा चेलाहरूले प्राथमिक स्रोतहरूको सङ्कलन, खोजी, प्रकाशन र भरपर्दो व्याख्या गरेका छन् त्यहाँ हामी सबैले उहाँहरूको पूजा गर्छौं । तर जहाँ वहाँहरूले कट्टर मतका प्रचारक भएर संकीर्ण, आदम्बरी, पाखण्डी, अहंकारी, असहिष्णुता र अल्पज्ञानको आधारमा मूर्खतापूर्ण र खोटो निर्णयहरू गरे र त्यही निर्णयका कट्टर प्रचारक भएर उहाँहरूको रायसँग बाभ्रुनासाथ अरूहरूलाई व्यक्तिगत गालिगलौज र संस्थाहरूमाथि प्रहार गर्न थाले उहाँहरूलाई हामीले तिनै हतियार प्रयोग गर्न बाँकी राख्नुपर्ने कुनै आवश्यकता छैन ।

यदि नयराज र उहाँका शिक्षा-दीक्षा र अभिषेक प्राप्त बचेखुचेका तथाकथित 'स्नातक' चेलाहरू यो ठान्दछन् कि लिच्छविकालीन इतिहास भनेको उहाँहरूको व्यक्तिगत वा पारिवारिक विर्त्ता हो र उहाँले ६० वर्ष अगाडि गरेको 'खोज' को आधारमा गरेको मूर्खतापूर्ण निर्णय आजपनि ब्रह्मवाक्य झैं सम्पूर्ण नेपाली बौद्धिकहरूलाई मान्य नै हुनुपर्दछ भन्ने ठान्नु हुन्छ भने उहाँहरूको स्थान या त चिडियाखानामा सुरक्षित गर्नुपर्‍यो या म्यूजियममा । अन्यत्र अब उहाँहरूलाई उपयुक्त ठाउँ उपलब्ध हुन गाह्रो-साह्रो पर्दै जानेछ ।

विगत ३० वर्षदेखि लगातार (**पूर्णिमा** पूर्णाङ्क अङ्क ३२ (२०३१ साल माघ) देखि शुरु भएको अंक ५८, ६२, ६४, ७२, ९२ मा) र थरीथरी प्रकाशन र गोष्ठी-सभाहरूमा भएको व्यक्तिगत आक्रमण र वाक्प्रहार (जस्तै 'अवसरवादी', 'जातीय विद्वेष फैलाउन', 'फटाहा', 'मूर्ख', 'अल्पज्ञानी', 'अज्ञानी', 'मूर्खमण्डलीका विद्वच्छिशरोमणि' हेर्नुस, **देशेय्मरु झ्या** : २०५४ बैशाख १२ र १९ तथा **नेपाल समाचारपत्र** जेष्ठ ४, २०५४) आदि आज सम्म मैले धैर्यपूर्वक सहँदै आएको थिएँ । मैले बेला-बखत लेखेका वा बोलेका कुरामा कुनै गल्ती भएको छैन भनेर म दाबी गर्दिन । तर जब दिनेशराज पन्तले अखवारवाजी समेत गर्न पछि परेन तब मलाई लाग्यो कि यी पाखण्डीहरूलाई नङ्ग्याउन ढिलो भयो ।

## पं. नयराजको अवदान

नौसिन्दा, मुखिया र खर्दारहरू जम्मा गरेर 'गुरुकुल' चलाई 'बौद्धिक क्रान्ति' शुरु गर्ने पं. नयराजले आफ्ना चेलाहरूलाई घोकन्ते विद्यामा पारङ्गत गरे होलान् । **भट्टिकाव्य**, **हर्षचरित्र**, **अमरकोश**, **रघुवंश**, **कौटलीय अर्थशास्त्र**, **अष्टाध्यायी**, **सिद्धान्त शिरोमणि**, आदि "आधारभूत कृतिहरू" कण्ठस्थ पारेर दिनानुदिन गुरुजीलाई पाठ सुनाउनै पर्दछ । नत्र उक्त पाठशाला या त छोड्नु पर्छ या निष्काषित होइन्छ । शुरुका २१ जना मध्ये २०१३ साल पुग्दा ८ जना बाँकी रहेका, १२ जनाले यस पढाइमा असन्तोष देखाई यो काम छाडेका हुन् । १ जनाले मात्र (**अष्टाध्यायी**सम्मको) पाठ सुनाई सन्तोषपूर्वक विदा भएका थिए । उहाँहरू नेपालमा समाजशास्त्र, संस्कृत, इतिहास, पञ्चाङ्ग, साहित्य, पुराण, दर्शनास्त्र, कोशविज्ञानदेखि अन्य

सबै ज्ञात-अज्ञात मानवशास्त्रमा अनुसन्धान गर्ने एक मात्र निकाय हुन् । ज्योतिषशास्त्रमा विशिष्टता प्राप्त गरेका पं. नयराज पन्त आदिका ग्रन्थसूचीमा *Journal for the History of Astronomy* जस्ता ख्यातिप्राप्त अनुसन्धान-प्रधान प्रकाशनदेखि Hermann Jacobi आदिको एउटा सामान्य लेखको उल्लेखसम्म पनि यस गुरुकुलको ग्रन्थसूचीमा नपर्नु अभिष्टसूचक नै मान्नु पर्ला । **सिद्धान्त शिरोमणि** रटेर कण्ठपार्नु एउटा कुरा हो तर भारतीय ज्योतिष सम्बन्धी आधुनिक भारतीय र पाश्चात्य अनुसन्धानसँग परिचित हुनु अर्को कुरा हो । नयराज जस्तो अंग्रेजी-शिक्षा र पाश्चात्य विद्याका कट्टर विरोधीलाई यो कुरा सुहाउने पनि भएन । वहाँ त **पृथ्वीनारायण शाहको 'दिव्य-उपदेश'** लाई नेपाली र संस्कृत पद्यमय व्याख्यामा नै विभोर हुनुहुन्छ । तर प्रज्ञा-प्रतिष्ठान जस्तो नेपाली करदाताको अनुदानबाट चलेको संस्थाले उहाँको कविताशून्य 'शोख' पूरा गर्न यस्ता उल्लू प्रकाशनहरूको किन आर्थिक भार बोक्नु परेको हो सो प्रज्ञा-प्रतिष्ठान नै जानुन् ।

२०४६ को जनआन्दोलनको मध्यान्हमा तत्कालिन प्रज्ञा-प्रतिष्ठानका उप-कुलपति लगायत सम्पूर्ण सदस्यहरूलाई आन्दोलनकारी कवि, साहित्यकार, कलाकार तथा विद्वान्हरूले घेरेर राजीनामा गर्न बाध्य गराए । तर आफ्नो कोठाका टेवलमुनी लुकेर आफ्नो कुर्सी च्यापेर राजीनामा दिन इन्कार गरेर पं नयराजले एक कीर्तिमान स्थापित गरे । प्रज्ञा-प्रतिष्ठानमा २०३६ बैशाख १ देखि २०४६ को आन्दोलनपछि बनेको प्रज्ञा-प्रतिष्ठानमा २०५० साल फाल्गुण मसान्तसम्म १५ वर्ष उही स्थान ओगटेर बसिरहे । तर दशौं वर्षसम्म प्रज्ञा-प्रतिष्ठानमा बसेर आखिर पण्डितजीले के काम फत्ते गरे भन्दा वहाँ कै मुखारविन्दबाट सुन्नु कल्याण होला:

> नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानमा म बसेको पूरा साढे ६ वर्ष भयो । यस अवधिमा मेरो विभागले गर्न सकेको अन्वेषण एउटा मात्र छ । ......मानदेवको विष्णुपादुको फेदीको अभिलेखको संवत् ३९६ पनि होइन, ३९५ पनि होइन वास्तवमा ३९८ हो भनी निर्णय गऱ्यो । (**लिच्छविसंवत्को निर्णय**, पृ. २४)

तर सोही पुस्तकको पृ. ५५८-५५९ छापिएको सो अभिलेखको चित्र-फलक हेरेर लिच्छवि-अङ्क परीक्षण गर्ने क्षमता भएका जो कोहीले पनि यो ३९५ नै हो भन्ने ठम्याउन गाह्रो पर्दैन ।

## लिच्छवि अभिलेखका केही विशेषताहरू

लिच्छविकालका हालसम्म २०७ जति अभिलेखहरू प्रकाशित भइसकेका छन् । ती अभिलेखहरूका निम्नलिखित विशेषताहरू मननयोग्य छन् । (१) अभिलेखहरूमा प्रयुक्त कुनै पनि संवत्को नाउँ छैन । (२) संवत् १०७ देखि शुरु भएर संवत् ५३६ सम्म शतस्थानि अंक सहित एक थरी अभिलेखहरू छन् भने सतस्थानी अङ्करहित २९ देखि शुरु भई ३०१ सम्म अर्का थरी अभिलेखहरू छन् । (३) अंशुवर्माको 'बर्तमान् संवत्' ३१ को एउटा बाहेक अरू अभिलेखमा प्रयोग भएको संवत् 'गत' हुन् वा 'वर्तमान' हुन स्पष्ट छैन । 'वर्तमान' संवत्को गणना १ देखि हुन्छ भने 'गत' को ० देखि हुन्छ । (४) अंशुवर्माको संवत् ३१ माघशुक्ल

त्रयोदशी पुष्य नक्षत्र आदित्यवार उल्लेख भएको एउटा तथा कुनै मानदेवको संवत् ३०१ वैशाखशुक्ल ७ आदित्यवार पुष्य नक्षत्र सिद्धयोग उल्लेख भएको एक पुष्पिकाभिलेख बाहेक अन्य कुनैमा पनि हिन्दू कालक्रमको गणनाको लागि नभइ नहुने वारादि पञ्चाङ्ग (तिथि, बार, योग, नक्षत्र र करण) सबै पूर्ण छैन । (५) पौष र आषाढ महिनामा अधिमास उल्लेख भएको पहिलो थरीमा ७ वटा र दोश्रो थरीमा ४ वटा गरी जम्मा ११ अभिलेखहरूमा अधिमास परेका छन् । अन्य कुनै महिनामा क्षयमास वा अधिमासको उल्लेख पाईदैन । यसबाट लिच्छविकालीन नेपालमा भारद्वाजको मत अनुसार मध्यममानद्वारा अधिमास निर्णय गर्दो रहेछ भन्ने देखिन्छ । एक अयनभित्र ७ चन्द्रमास परेमा सो मास जुनसुकै महिनामा परेपनि अयनको अन्त्यमा अधिमास मान्दा सालाखाला ६० सौरमासमा ६२ चान्द्रमासको हिसावले ३०/३० महिनामा १ पटक अधिकमास पर्छ । स्पष्टमान अनुसार पौषमा क्षयमास मात्र पर्न सक्तछ तर अधिमास कहिल्यै पर्दैन । मध्यममानद्वारा श्रावणदेखि कुनै पनि चान्द्रमासमा संक्रान्ति नपरे आषाढमा तथा माघदेखि आषाढसम्म कुनै पनि चान्द्रमासमा संक्रान्ति नपरे पौषमा अधिमास मान्ने चलन नेपालसंवत् ५७७ तिरसम्म चलेको देखिएकोले लिच्छवि अभिलेखमा परेका कुनै पनि अधिमासको आधारमा त्यसमा प्रयोग भएको संवत् कुन हुन् भन्ने निर्णय गर्नु असम्भव छ ।

## पं पन्तको पाखण्डी अभ्यास

यति समान्यज्ञानको आधारमा पनि पण्डित नयराज पन्तको ६४० पृष्ठको **लिच्छविसंवत्को निर्णय** भन्ने पुस्तक कति पाखण्डी अभ्यास रहेछ भन्ने छर्लङ्ग हुन्छ । किनभने वारको उल्लेख नभएको अभिलेखको प्रामाणिक गणना गर्न सम्भव छैन । मध्यममान र भारद्वाज मत अनुसार अधिमास मान्ने प्राचीन नेपालमा अधिमासको आधारमा कुन संवत् अभिलेखमा प्रयोग भएको रहेछ गणनाद्वारा सिद्ध गर्न सकिदैन किनभने १२ महिनामा कि आषाढ कि पौषमा मात्र अधिमास पर्ने भएपछि त्यहाँ प्रयुक्त संवत् कुन हो भन्ने निर्णय गर्ने कुनै आधार रहँदैन ।

अब प्रश्न उठ्छ पण्डितजीले यस्तो पाखण्डी र निरर्थक उद्योगमा किन लगे ? गरीब नेपाली करदाताको साधन र स्रोत किन वर्वाद गरे ? हो, सन् १९५८ मा इटलीका इतिहासकार लूच्यानो पेटेकले पाँच वर्षमा दुईवटा अधिमास पर्ने पञ्चयुगात्मक वेदाङ्ग ज्योतिष अनुसार अढाई वर्षमा (आषाढमा) एक पटक र पाँचौ वर्षको अन्त्यमा (पौषमा) अधिमास पर्छ भन्ने कौटलीय **अर्थशास्त्र** (२/२०/३८) को उल्लेख गरेका थिए । सो पद्धति नेपालमा चलेको होला भन्ने आभास पण्डितजीको मनमा परेको देखिन्छ । यसैको आधारमा नयराजले **पूर्णिमा** अङ्क ३४ र अङ्क ३७ मा वेदाङ्ग ज्योतिषसम्बन्धी केही निबन्धहरू लेख्न थाले । यस क्रममा उहाँको सबभन्दा रोचक निबन्ध **लिच्छलिसंवत्को निर्णयमा** समावेश भएका दुई निबन्ध छन्- “चाँगुको मानदेवको अभिलेखको तिथिमितिले वेदाङ्ग ज्योतिष अनुसार गणना गर्ने रीतिको उदाहरण प्रस्तुत गर्दछ” (पृ. ९२-१०५) तथा “वेदाङ्ग ज्योतिष अनुसारको सौरवर्षको मानमा उठेको शङ्कालाई लिच्छविकालका पहिला थरी संवत् परेका अभिलेखमा देखिएका अधिमासले हटाइदिन्छन्” (पृ. १०६-११७) । संवत् ३८६ जेष्ठशुक्ल प्रतिपदा रोहिणी नक्षत्र अभिजित् मुहूर्तमा मानदेव प्रथमले चाङ्गुमा आफ्नो विजयाभिलेख राखेका थिए ।

ज्येष्ठशुक्ल प्रतिपदामा रोहिणी नक्षत्र पर्नु र अभिजित् (दिनको ३० मुहूर्तमा आठौं मुहूर्त) पर्नु कुनै दुर्लभ काल-संयोग होइन । त्यसकारण यो तिथि कुनै पनि गणनाद्वारा मिल्नु वा मिलाउनु ठूलो बौद्धिक पुरुषार्थ होइन भन्ने कुरा प्राचीन नेपालको कालक्रमको समस्यासँग परिचित सबैलाई थाहा भएको हुनुपर्दछ । झन् पण्डित नयराज पन्त त ३५ वर्षसम्म सिद्धान्त-ज्योतिष पढाईसकेका र सिद्धान्त-ज्योतिषको प्रथम श्रेणीमा प्रथम उत्तीर्ण आचार्यलाई त लाजमर्दो कुरा भयो । उही तिथिलाई लेवी, फ्लिट, पेटेक र शंकरमान राजवंशीले थरी थरी संवत् मानेर गणना गरी "ट्वाक्क मिलाएका" थिए ।

पण्डित नयनराज पन्त कति पाखण्डी रहेछ भन्ने प्रमाण खोज्न अरू टाढा जानु पर्दैन । यदि हरेक ५ वर्षको बीचमा (याने ३० महिनामा एक पल्ट (आषाढ) र अर्को ३० महिनामा (पुष) एक पल्ट) अधिमास मान्ने वेदाङ्ग ज्योतिष अनुसारको पद्धति लिच्छविकालमा चलेको भए संवत् ५१७ प्रथम आषाढशुक्ल १२ (धर्मस्थली) को र संवत् ५१९ प्रथमपौषशुक्ल १२ (सतुङ्गल) को अभिलेखको बीचमा जम्मा १८ महिनाको मात्र फरक छ । त्यस्तै भक्तपुर इनाय्चोको संवत् ३१ द्वितीयपौषशुक्ल ८ र (ललितपुर, सुनधारा) को संवत् ३४ प्रथमपौषशुक्ल २ को बीचमा ३६ महिनाको अन्तर छ भने सुनधाराको अभिलेख र गोकर्ण वलुवा गाउँको संवत् ५३६ द्वितीयपौषशुक्ल ५ को वीचमा २४ महिनाको अन्तर देखिन्छ । त्यसैले नेपालमा वेदाङ्ग ज्योतिष अनुसार ठीक ३०/३० महिनाको अन्तरमा आषाढमा एक पटक र पौषमा अर्को पटक अधिमास मान्थ्यो भन्ने पण्डित पन्तको दावीको कुनै तुक छैन ।

पुस्तकको आदिमा उहाँले यस्तो दावी गरेपछि अन्त्यमा उहाँकै सुलेखनीबाट यसकै विपरित स्वीकारोक्ति पढ्दा यो पुस्तकले मदन पुरस्कार, त्रिभुवन पुरस्कार आदि अनेक "बौद्धिक सम्मान" पाए पनि उहाँ र उहालाई पुरस्कृति गर्ने परीक्षकहरूको बौद्धिक ल्याकत र हैसियत के रहेछ खुलस्त हुन्छ । जुन महापण्डितले वेदाङ्ग ज्योतिष अनुसार मानदेवको अभिलेखको गणना ट्वाक्क मिल्छ र अधिमासको हिसाव पनि ३८ वर्षमा १४ वटा अधिमास माने भनेर लेखे (पृ ११७) उनैले त्यही पुस्तकको पुच्छारमा यस्तो लेख्दछ भने "हिसाव मिलाए" भन्नु वृथा गर्व र फोस्रो धाक मात्र रहेछ । "वेदाङ्ग ज्योतिष त अहिलेसम्म जम्मै **आफैले बुझेको छैन**, अरूलाई पढाउने कुरा त परै जावस ...... । सूत्रका अर्थ गर्न कहिले सकिन्छ ? त्यसको आधारमा मानदेवहरूका अभिलेखमा देखिएका अधिमासलाई कहिले गन्न सकिन्छ ? जे भए पनि म एक्लै भए पनि नमरेसम्म यो काम चलाई नै रहनेछु" । (पृ ५७५)

## सुमतितन्त्रमा अयनांश

पण्डित नयराज अनुसार **सुमतितन्त्र** लिच्छविकालमा नेपाल उपत्यकामा रचना भएको ग्रन्थ हो । यो लिच्छविकालको ग्रन्थ भएको दावी गर्ने आधारको रूपमा उहाँहरूको "अनुसन्धान" अनुसार यसमा दिइएको "सावन दिनको गणना" वाराहमिहिरले **पञ्चसिद्धन्तिका**मा उल्लेख गरेको प्राचीन सूर्य सिद्धान्तसँग मिल्छ । **सुमतितन्त्र** अनुसार सौरवर्षको मान ३६५ दिन १५ घडी ३१ पला र ३० विपला छ भने वर्तमान सूर्य सिद्धान्तमा ३६५ दिन १५ घडी ३१ पला र २४ विपला छ । तर सन् १५०९ को गणेश दैवज्ञको **ग्रहलाधव**मा पनि ३६५ मा दिन १५ घड ३१ पाल र ३० विपला नै छ । यति कै भरमा सन् १५०९ को ग्रन्थलाई पनि

लिच्छविकालीन ग्रन्थ मान्नुपर्ने भयो त ? यस्तो वकम्फुस तर्कलाई आधार मानेर ग्रन्थको कालक्रम निश्चय स्वनामधन्य इतिहासकारहरूबाट मात्र हुन सक्दछ जसले **हनूमान् चालिसे**देखि पाणिनिको **अष्टाध्यायी** र कौटल्यको **अर्थशास्त्र**सम्म धोकेर गुरुसमक्ष ओकल्नुलाई नै आफ्नो शिक्षाको पुरुषार्थ सम्झन्छ । अँ साँच्चै, **सुमतितन्त्र**मा अयनांशको चर्चा छैन रे । तर भारतीय-ज्योतिषका प्रकाण्ड विद्वान् श्रीशंकर वालकृष्ण दीक्षितको स्पष्टस्वीकारोक्ति छ कि भारतीय ज्योतिषहरूले सूक्ष्म अयनगति कहिले र कति निश्चित गऱ्यो भन्न कठीन छ । शक ५०० को लगभगका विष्णुचन्द्रले यसको चर्चा गरिसकेको स्पष्ट उल्लेख भास्कराचार्यले गरेका छन् । (हेर्नुस् David Pingree "History of Indian Mathematical Astronomy" *Dictionary of Scientific Biography*, Vol. XV, pp. 533-633) ।[1] त्यस्तै दीक्षितकै कथन अनुसार "शककाल की सातबी शताब्दि लगभग हमारे देश में अयनचलनका सूक्ष्म ज्ञान हुआ । ......उनमेंसे अधिकांश ज्योतिषी **सम्पातका पूर्ण भ्रमण नहीं बल्कि आन्दोलन** मानते थे । और उस समय ऋतुओं में भी अन्तर नहीं पड़ा था । कदाचित् इसी कारण उन्हों ने स्वीकार न किया हो, फिरभी अयन और विषुव का वास्तविक काल उन्होंने लिख ही दिया है ।" (शंकर बालकृष्ण दीक्षित, **भारतीय ज्योतिष** (लखनऊ : सूचना विभाग, उत्तर प्रदेश : हिन्दी समिति, १९६३ द्वितीय संस्करण शिवनाथ झारखण्डीद्वारा मराठीबाट अनुदित पृष्ठ, ५४९-५५०) ।

पं नयराज पन्त तथा उहाँका सुपुत्रको अर्को खोटो निर्णय छ - **सुमतितन्त्र** नेपाल खाल्डोमा नै लेखिएको ग्रन्थ हो । यसको प्रमाणस्वरूप यस ग्रन्थमा ग्रन्थकारले आफनो देशलाई 'कन्याद्वीप' भनेर उल्लेख गरेको छ (ताडपत्रको ६५ पृ. क र ख) । त्यस द्वीपको अक्षाशं २७° उल्लेख गरेको छ रे । जुन ज्योतिषले यो ग्रन्थको रचना गरेका थिए एक क्षणको लागि मानौं उसलाई नेपाल उपत्यका वा नेपालमण्डल वा नेपालपत्तन नाम थाह रहेनछ र 'कन्याद्वीप' भन्ने अलङ्कारिक वा साङ्केतिक नाउँ उल्लेख गर्नुपऱ्यो भनौं । यस विषयमा नयराजको निम्नलिखित तर्कहरू मान्न लायकका छन्:

१. भास्करले उनको समयमा 'कन्याखण्ड'मा मात्र वर्ण-व्यवस्था रहेको उल्लेख गरेको छ ।
२. अंशुवर्माले आफूलाई 'आर्यमर्यादासेतु' (वर्णाश्रम व्यवस्था ननाधेका) भन्ने दावी गरेको छ ।
३. भाष्करको समयमा कन्याद्वीपमा मात्र बर्णाश्रम व्यवस्था बचेकोले **सुमतितन्त्र** नेपाल खाल्डोमा नै लेखेका हुन् ।

अंशुवर्माको समय सन् ५९४ देखि ६२०/२१ सम्म हो । भास्करको जन्म सन् १११४ मा भएको थियो । यी दुई स्रोतका बीचमा घटीमा पनि ५०० वर्षको अन्तर छ । नेपाललाई आजसम्म "कन्याद्वीप" भनेर उल्लेख गरेको कुनै पौराणिक वा ऐतिहासिक स्रोत भेट्टिएको छैन । **सिद्धान्त शिरोमणि**को प्रख्यात् 'भुवनकोश'को श्लोक ४१ मा नवद्वीपहरूमध्ये भारतवर्षलाई कन्याद्वीप भनी उल्लेख छ ।

---

[1] The idea of trepidation or precession (Varahamihira *PS* III 20-22; BS III 1-2) was introduced into India by the Greeks, though the parameters chosen by the Indians are their own, (Pingree, 'Precession and Trepidation in Indian Astronomy", 1972, p. 27.)

काठमाडौंको अक्षांश र देशान्तर दिन बराहमिहिर र लक्ष्मीपतिको कृतिको सहारा लिनु आवश्यक ठान्ने नयराज-दिनेशराज पन्त र देवीप्रसाद भण्डारीको अनुसन्धान प्रविधि र विद्वताको अगाडि तपाई हामी जस्ता मामुली मान्छे नतमस्तक हुनु सिवाय अरू के गरौं ?

पण्डित नयराज र उहाँका चेलाहरू अनुसार **सुमतितन्त्र** लिच्छविकालीन ग्रन्थ हो किनभने यसमा अयनांशको उल्लेख छैन । वार्षिक ५०.२५ सेकेण्डको गतिले लगभग ७२ वर्षमा १ डिग्री चैत्रशुक्ल प्रतिपदाभन्दा पछि मेष संक्रान्ति सर्दै गएको जुन गति हो त्यसलाई भारतीय ज्योतिषहरू 'अयनांश' भन्दछन् । अहिले यो फरक २३/२४ दिनको छ । त्यसलाई आधुनिक पाश्चात्य खगोलविद्‌हरू The Precession of Equinoxes भन्दछन् । भास्करले स्पष्ट शब्दमा उल्लेख गरेका छन कि ब्रह्मगुप्तको समयमा अयनांश धेरै थोरै भएकाले उनले उल्लेख नगरेका हुन् । पृथूदकस्वामीको टीकाबाट पनि यो स्पष्ट हुन्छ कि भारतीयहरूलाई पहिलेदेखि (अझ शक ५०० तिरका विष्णुचन्द्रदेखि) नै अयनचलनको ज्ञान थियो । चैत्र शुक्लप्रतिपदा र मेषेअर्क कुन बेला बराबर थियो (शक ४४४, शक ४४९, अथवा शक ५३२) भन्ने विवाद इतिहासमा एकातिर छ भने वार्षिक अयनगति पनि कति हो भन्ने सिद्धान्तैपिच्छे फरक देखिन्छ । यदि **सुमतितन्त्र**का रचनाकारलाई अयनांशको ज्ञान र अवधारणा नभएको भए उसले सो शब्द नै प्रयोग गर्ने थिएन होला । तर **विक्षेपक्रान्ति अयनान्शञ्च तेन कारयेत्** (पत्र २७ क) र चन्द्रग्रणको सन्दर्भमा पत्र ९८ मा **"अयनांशकर्मे गुण १३९८ भाग ३४३८"** भनेर लेख्दैनथ्यो होला । त्यसकारण **सुमतितन्त्र**कारलाई अयनचलनको अवधारणा र सूत्र दुबै थाहा थियो र यो ग्रन्थ अयनांशको सूक्ष्म मानको ज्ञान भएपछि दक्षिण भारतमा रचना भएको हो । त्यताबाट सिमरावनगढ हुँदै नेपाल उपत्यकामा आइपुगेको हो । यसमा सूर्य सिद्धान्तका १४ परिच्छेद मध्ये पात्रो बनाउन उपयोगी पहिलो ५ परिच्छेद र अपूर्ण छैठौं परिच्छेद मात्रै समविष्ट छन् । यसको त्रिप्रश्नाधिकारको भूगोल र ब्रह्माण्डाधिकारका खगोल दुवै केही कामको छैन । यंहाँकाले पात्रो बनाउन सजिलो पार्नका लागि कलि आरम्भदेखि नेपालसंवत् आरम्भसम्मका कालगणना गरेर अहर्गण निकाल्न **एतानि पिण्ड कलिवर्षमाहुः** भनिएको हो । नेपालसंवत्‌बाट शकसंवत् लैजाने सूत्र दिंदा पनि चैत्रादि 'गत शक' ८०१ वर्ष ७ महिना पछि नेपालसंवत् शुरु भएकोलाई स्थूल संख्या ८०२ दिएको छ । यसमा दिइएका संवत्‌हरू पनि यसको भूगोल र व्रह्माण्डाधिकार जस्ता सबै पौराणिक आख्यान र अनुश्रुतिमा आधारित हुनमा कुनै शङ्का छैन ।

## सुमतितन्त्र सम्पादन-अभ्यासको दुर्दशा

नयनराज पन्त, उनका सुपुत्र दिनेशराज तथा वरिष्ठ शिष्य देवीप्रसाद भण्डारीद्वारा सम्पादित **सुमतितन्त्रम्** (प्रथमो भागः) नामक पुस्तक सन् १९७८ को जून महिनामा त्रिभुवन विश्वविद्यालय, पाठ्यक्रम विकास केन्द्रले प्रकाशित गरेको थियो । सो ग्रन्थ सम्पादन गर्न संस्कृत अध्ययन संस्थानबाट उहाँहरूलाई केही समयको लागि मासिक रु. ६००/- विद्वत्‌वृत्ति दिइएको थियो । सो वृत्तिको बाँडफाँडको कुराबाट शुरु भएको नयराज र उहाँकै चेलाबीच शीतयुद्ध र वाकयुद्ध आज २४ वर्षपछि पनि टुङ्गिएको रहेनछ भन्ने कुरा

श्यामसुन्दर राजवंशी र दिनेशराज बीचको **देशेयम्रु भ्रूयाः** पत्रिकाको मार्ग २७, देखि फाल्गुण २, २०५३ सम्मका अङ्कहरू पल्टाएर हेरे स्पष्ट हुन्छ । जुन बेला नयराजको प्रमुख सम्पादकत्वमा पाठ्यक्रम विकास केन्द्रले **सुमतितन्त्र** छाप्यो त्यतिबेला म त्रिभुवन विश्वविद्यालयको शिक्षाध्यक्ष थिएँ । त्यही नाताले तत्कालीन डीन श्रीअम्बिकाप्रसाद अधिकारीले सो पुस्तक एकप्रति मलाई दिन ल्याएको थियो । त्यसको लगत्तै पछि मैले सो पुस्तक केलाएर हेरेको थिएँ । आफ्नो असन्तुष्टि, केही प्रश्न र जिज्ञासाहरू डीनको अगाडि राखेको थिएँ ।

**सुमतितन्त्र** समीक्षाको लागि लखनउ, प्रयाग र काशी विश्वविद्यालयहरूमा पठाएको थिएँ । कहिँबाट पुस्तक प्राप्तिको सूचनासम्म पनि नपठाउनु अचम्मको कुरा लागेको छ । सो ग्रन्थ प्राचीन सूर्य सिद्धान्तमा आधारित पात्रो बनाउने पुस्तक हो । यसको ने.सं. ४७६ पौषकृष्ण १० आदित्यवारमा सारिएको १ प्रति बृटिश म्यूजियममा र ने.सं. ४९५ पौषकृष्ण १३ आदित्यवारमा दोस्रोपटक सारिएको अर्को प्रति राष्ट्रिय अभिलेखालयमा छ । पं. नयराज र उहाँका चेलाहरूले आलेखन-सम्पादन गरेको सो ग्रन्थमा समाविष्ट सामाग्रीमध्ये ताडपत्रमा नेपालभाषामा लेखिएको ने.सं. ४५६ देखि ने.सं. ५७३ सम्मका विभिन्न टिपोट सहित केशर पुस्तकालयमा संग्रहित नं. ८२ को **सुमतिसिद्धान्त** पनि छ । दुर्भाग्यवश त्यस ग्रन्थको प्राचीन नेपालभाषाको आलेखनमा पत्रैपिच्छे भद्दा अशुद्धिहरू रहेकोले त्यसको खास उपयोग गर्न सकिदैंन । यो ग्रन्थ मेरो हातमा परेदेखि मलाई अहिलेसम्म आश्चर्य लागेका र विश्वास नै गर्न नसकिने एकाध कुरा मात्र म यहाँ राख्ने छु ।

सबभन्दा पहिले त हस्तलिखित ग्रन्थ-सम्पादन गर्दा नयराज आदिले बृटिश म्यूजियमको प्रति हेरेको थिएन । यो कुरा त सो पुस्तकको भूमिकाको पृष्ठ २८ बाट स्वत: स्पष्ट नै छ । त्यो भन्दा आश्चर्यको कुरा त नयराज पन्तजस्ता महापण्डितलाई आचार्य सुमतिको उल्लेख केरलाका राजज्योषित शंकरनारायणले गरेका थिए भन्ने कुरा थाहा रहेनछ भने उहाँका चेलाहरु कसरी थाहा होस् ?

ग्रन्थ-सम्पादनको सामान्य सिद्धान्त विपरित उहाँहरूले सन् १९७८ मा **सुमतितन्त्र** सम्पादन गर्न बस्दा सम्भवत: **कौमुदी**को सूत्र र पाणिनीय व्याकरणको मान्यता अनुरूपमात्र "संशोधित पाठ" भनेर भूमिकाको २, ५, १०, १३, १४, १८, २५, २७ आदि पृष्ठमा जुन पाठ दिए सो ग्रन्थ-सम्पादन विज्ञान वा कलाको ज्ञानको दारिद्र्यको नाङ्गो नमूना ठान्दछु । कुनै हस्तलिखित ग्रन्थको विभिन्न ठाउँमा विभिन्न समयमा सारिएका प्रतिहरू उपलब्ध छन् भने तिनीहरूको कुनै अध्ययन र तुलना नै नगरी सामान्य व्याकरणको शुद्धाशुद्धिका आधारमा गरिएको "संशोधन" लाई बहुलट्टी कार्य बाहेक अरू के भन्न सकिएला ?

## सुमतितन्त्रको भ्रष्ट 'इतिहास' र कालक्रम

**सुमतितन्त्र** आर्यभटको आर्द्धरात्रिक पक्षलाई उनकै शिष्य लाटदेवले संशोधन गरे अनुसारको प्राचीन सूर्यसिद्धान्तमा आधारित पात्रो बनाउने पुस्तक हो । तर नयराज पन्त लेख्दछन्

> **सुमतितन्त्र**को गणित यस ग्रन्थमा प्रयोग भएको छैन । **सुमतितन्त्रबाट** आएको इतिहासको भने यस ग्रन्थमा सम्पूर्णरूपले प्रयोग भएको छ । (**लिच्छविसंवत्को निर्णय**, पृ. ५६६)

यो वाक्य पढ्ने जुनकुनैलाई पनि भ्रम होला कि पण्डित नयराज पन्त (इतिहास संशोधन-मण्डलका संस्थापक र सो युगान्तकारी आन्दोलनका प्रवर्त्तक) **सुमतितन्त्र**लाई इतिहासको ग्रन्थ मान्नु हुँदो रहेछ । त्यसैले हामी जस्ता अल्पज्ञानीहरूलाई जिज्ञासा हुन्छ कि यस ग्रन्थमा आखिर इतिहासको त्यस्तो कुन रहस्य लुकेको रहेछ । वृटिश म्यूजियममा संग्रह भएको प्रतिमा निम्न श्लोक छन्:

जातो दुर्योधनो राजा कलिसान्ध्यं प्रवर्त्तते ।<br>
युधिष्ठिरो महाराजो दुर्योधनस्तयोपि वा ॥<br>
उभौ राजौ सहस्रे द्वे वर्षन्तु सम्प्रवर्त्तति ।<br>
नन्दराज्यं शताष्टञ्च श्चन्द्रगुप्तस्ततोपरे ॥<br>
राज्यङ्करोति तेनापि द्वात्रिंशच्चाधिकं शतं ।<br>
राजा शूद्रकदेवश्च वर्षसप्ताब्धि चाश्विनौ ॥<br>
शकराजा ततोपश्चाद्वसुरन्ध्रकृतन्तथा ।<br>
इत्येते भाषितम्मह्यं ज्ञेया राजा क्रमेन तु ॥

सेषा युत्ताश्च कृत अम्बराग्नि ३०४ श्रीमानदेवाब्द प्रयुज्यमाना एतानि पिण्ड कलिवर्षमाहु:॥ (२ ख-३ क)

यी श्लोकका नयराज पन्त आदिको नेपाली अनुवाद: 'दुर्योधन राजा भएपछि कलियुग लाग्छ । युधिष्ठिर/दुर्योधन संवत् २००० वर्षसम्म, त्यसपछि ८०० वर्षसम्म नन्द संवत्, त्यसपछि १३२ वर्षसम्म चन्द्रगुप्त संवत्, त्यसपछि २४७ वर्षसम्म शूद्रकदेव संवत्, त्यसपछि ४९८ वर्षसम्म शक संवत्, त्यसपछि ३०४ वर्षसम्म मानदेव संव्त यी सबै मिलाएर कलि वर्ष हुन्छ ।

यी श्लोक अर्वाचीन सूर्य सिद्धान्तको प्रथम अध्यायको कलि आरम्भदेखि ग्रन्थ आरम्भसम्म मिलाएर वर्ष जम्मा गरी अहर्गण साधन गर्नु भन्ने श्लोक २३ "**अत: कालं प्रसंख्याय सङ्ख्यामेकत्र पिण्डयेत्**" भन्ने को रूपान्तरण गरेर नेपाल उपत्यकाका कुनै ज्योतिषले रचेको कुरामा कुनै शंका छैन । किनभने यहाँ उपलब्ध प्रतिमा थपुवा चिन्ह/संकेत दिएको छ भने लण्डनको प्रतिमा अनुष्टुभ् छन्दको बीचमा यो गद्यमा दिएको छ ।

"युधिष्ठिर-दुर्योधनसंवत्" लाई एक छिन विर्सेपनि यहाँ उल्लेख भएको ५ थरी संवत्मा कुनै पनि संवत् इतिहास-सम्मत छैन । जस्तै:

| सुमतितन्त्र अनुसार | इतिहास-सिद्ध |
| --- | --- |
| नन्दराज्य ८०० | इसापूर्व - ३६२ ३२० - जम्मा ४२ वर्ष |
| चन्द्रगुप्त १३२ | इसापूर्व - ३२१ - २९८ - जम्मा २३ वर्ष |
| शूद्रक/शातवाहन वंश २४७ | इसापूर्व - ५० - २५० - जम्मा ३०० वर्ष |
| शकराज ४९८ | नेपालमा शक संवत् १०७-५३६ - जम्मा ४२९ वर्ष |
| "मानदेव संवत्" ३०४ | संवत् २९-३०१ - जम्मा २७२ वर्ष |

हेर्नुस: Romila Thapar, *The Penguin History of Eary India: From the Origins to AD 1300* "Chronology," (London : 2002), p. xii.

## भोटका प्रमाण

यसबाट के स्पष्ट हुन्छ भने पण्डित नयराज र उहाँका विद्वान् सुपुत्रको लागि **सुमतितन्त्र** इतिहासको प्रमाणिक ग्रन्थ ठहरिए । यसमा दिइएको कुनै पनि संवत् प्रामाणिक होइन । यी संवत् सबै कपोलकल्पित हुन् भन्ने सबभन्दा ठोस प्रमाण भोटबाट उपलब्ध छन् । अतिशा-दीपंकर श्रीज्ञान तथा जयशिलद्वारा अनुदित भावविवेकको **तर्कज्वाला** (सन् ४५० तिर) बाट लिइएको कालक्रमा आधारित एक छोटो लेखमा सो-नाम जे-मो (११४२-११८२) ले **सुमतितन्त्रमा** दिएको जस्तै एक कालक्रम दिएको छ ।[2] बुद्धमहापरिनिर्वाण भएको १३७ वर्षपछि महापद्मनन्द भए; त्यसको ८०० वर्षपछि चन्द्रगुप्त भए । त्यसको १३२ वर्षपछि शूद्रक भए; त्यसको ४२७ वर्षपछि शकराज भए; त्यसको ४३८ पछि नेपालमा अंशुवर्मा भए । त्यसको २४२ वर्षपछि भोटमा राजा त्रि-शुग्-चङ्-दे-चन (राल्पाचन्) भए । यही कुरा रिम्पोचे पुतोंको **बुद्धधर्मको इतिहास** (सन् १३२२) मा पनि पाइन्छ । तर त्यसमा शकराज ४३८ वर्षपछि अंशुवर्माको उदयको कुरा छ भने चुम्पा खाङ्-पो को **द्पाग्-व्सम् ल्जोङ्-बजङ्** (सन् १७४८) मा अंशुवर्माको उदय शकराज ४१८ पछि भएको उल्लेखित छ । यहाँ स्मरणीय कुरा के छ भने भोटमा पाइएको यो कालक्रम **सुमतितन्त्रको** सबभन्दा पुरानोप्रति (ने.सं. ४७६/सन् १३५६) भन्दा १७४ वर्ष पुरानो छ । दोस्रो कुरा, यी स्रोतहरूमा अंशुवर्माको उदय कहीं शक ४३८ छ भने कहीं शक ४१८ हुनुको मूल कारण शायद जुन प्रतिबाट यो कालक्रम सारियो त्यसमा पनि वसु (८), रन्ध्र (९) कृत (४) को ठाउँमा वसु (८) चन्द्र (१/३) कृत (४) भएको हुनुपर्छ । तेस्रो कुरा, जहाँ **सुमतितन्त्रमा** मानदेवको उल्लेख छ त्यहाँ भोटको सबै स्रोतमा (सो-नाम-ग्याल-शन्, **साल्-वाइ मे-लोङ** लगायत पाँचै श्रोतमा अंशुवर्माको उदय वा राज्याभिषेक वर्षलाई काल-स्तम्भको रूपमा दिएको छ ।

---

[2] Buddha's Nirvana was in 2133 B.C. 137th year after this earth mouse year, the King Nanda appeared.This account appeared in *Tarkajvala* (=Toh. 3856). After 800 years from this king, Chandragupta appeared. From him, 231 years after, Sudraka appeared. After him, by counting years, when 724 years passed by, the Nepalese continued to count years after it, and still after 834 years the King Amsuvarman appeared. After him, by counting years, when 242 passed by, it reaches the King Kri gtsug lde btsan's reign. Thus should (years) be counted. (Bsod nams rtse mo, "Chronology")

शिवदेव प्रथम र अंशुवर्माको बीचमा "मानदेव द्वितीय" भन्ने राजा शक संवत् ४९८ मा भएको आजसम्म कुनै ऐतिहासिक प्रमाण भेटिएको छैन । गणदेव (संवत् ४८७) र शिवदेव प्रथम (संवत् ५१२-५२६) को बीचमा कुनै यस्तो शक्तिशाली राजाको (जसले संवत् प्रवर्त्तन गर्नसक्ने) कुनै छनक **गोपालराजवंशावली, केशरवंशावली** आदि प्राचीन वा **भाषावंशावली** आदि अर्वाचीन वंशावलीहरू नै पाइन्छ ।

भोटमा पाइएको उपरोक्त सबै प्रमाणहरूमा अंशुवर्मा उल्लेख हुनु **सुमतितन्त्र**को दुई प्रतिमा मात्र मानदेव उल्लेख हुनुले प्राध्यापक लुच्यानो पेटेकक्ले एक अनौठो सिद्धान्त निकालेका थिए । उहाँको सिद्धान्त अनुसार "मानदेव द्वितीय" अंशुवर्माको "कठपुतली राजा" थिए । उसलाई सिंहासनमा राखेर सन् ५७६ देखि गनेर २९ देखि शुरु गरिएको "नयाँ संवत्" महासामन्त अंशुवर्माले चलनमा ल्याए । भोटमा प्राप्त प्रमाणहरू केलाउने हुति नभएका नयराज र उनका सुपुत्रले उल्टा "मानदेवसंवत्" चलेको प्रमाण भोटेमा समेत गरेर ४ वटा वा ५ वटा पाइएका छन् भनेर कुइरा कागहरू जस्तै अखवारबाजी र सभा-गोष्ठीमा हल्ला पिट्न थालेका देखेर यी पाखण्डीहरूप्रति दया उठ्नु स्वभाविक हो ।

## आचार्य सुमति महाभारतका ऋषि ?

**सुमतितन्त्र** नेपाल उपत्यकामैं रचना भएको हो भन्ने दावी गर्ने अन्य पण्डितहरू पनि थिए । उदाहरणको रूपमा २०१७ साल मार्ग १ गते प्रकाशित वीरपुस्तकालयको हस्तलिखित पुस्तकहरूको **बृहत् सूचीपत्रम् भाग १ (ज्योतिष)** को भूमिकामा नेपालको संस्कृत-वाङ्मयको बखान गर्दै पण्डित बुद्धिसागर पराजुलीको 'प्राक्कथन' पृष्ठ (घ) अनुसार **सुमतितन्त्र**मा उल्लेखित 'गभस्तिद्वीप' र 'ताम्रद्वीप' काष्ठमण्डप नै हो । किनभने सो तन्त्रमा दिइएका 'चरप्राण' र यहाँका ज्योतिषहरूले प्रयोग गर्ने मेषादिमिथुनान्त 'चरप्राण' ट्वाक्कै मिल्छ । यस्तै ज्योतिषाचार्य देवीप्रसाद लंसाल/शर्माका अनुसार **सुमिततन्त्र** नेपालमै रचना भएको हो । किनभने यसमा दिइएका चर-प्राण नेपाली ज्योतिषहरूले प्रयोग गर्ने अनुसारका छन् । (देवीप्रसाद लंसाल **'सुमतितन्त्र' प्राचीन नेपाल** वर्ष १, अङ्क १, पृष्ठ ५-१०, २०२४)

सन् १९६३ मा लखनउ विश्वविद्यालयद्वारा प्रकाशित शंकरनारायण-रचित भाष्कर प्रथम (सन् ६२९ तिरका) को **लघुभाष्करीय** माथि **विवरण** (सन् ८६६) को चतुर्थ अध्यायको श्लोक १५-१६ को सन्दर्भमा आचार्य सुमतिको उल्लेख आएको छ ।

**अमावास्यन्ते चन्द्रविम्बेन पश्चिमदिगागतेन प्रच्छादनत्वात् । एतस्मिनर्थे सुमतिनाचार्येणैवमुक्तं च**

**प्राच्यां न रवेर्ग्रहणं वारूण्यां चापि शीतकिरणस्य ।**
**प्राच्यां वृणोति चन्द्रं वृणोति सूर्यः तथापरतः ॥**

आचार्य सुमतिको उल्लेख सन् ८६६ मा नै आएको सन्दर्भ नयराजलाई थाहा रहेनछ न वहाँका पुत्र चेलाहरुरूलाई नै । वहाँका पुत्र महेशराज पन्तको विद्वत्तापूर्ण व्याख्या अनुसार ऐतिहासिक व्यक्तित्व आचार्य सुमति महाभारतका ऋषि हुन् !

**सुमतितन्त्र** जसले बनाए तिनले आफ्नो ग्रन्थलाई पौराणिकताले रङ्गाएकोले यस ग्रन्थलाई धर्मप्राण जनतामा प्रतिष्ठित गर्ने विचार तिनको थियो भन्ने देखिन्छ । त्यसैले **महाभारतमा** नाउँ चलेका सुमति ऋषिलाई स्रोताको रूपमा उभ्याउन **सुमतितन्त्रका** कर्ता हुन् भन्ने देखिन गएको छ । (महेशराज पन्त, "सुमति को हुन् ? (**पूर्णिमा** ५९ २०४१ माघ, पृष्ठ २४-२६)

## छत्रे सारणीको दुरुपयोग

नयराज पन्तले ३५ वर्ष ज्योतिष पढाएर पेट पाले । **सिद्धान्त शिरोमणि** कण्ठस्थ गरे । तर भारतीय ज्योतिषको सामान्य-ज्ञान भएका व्यक्तिले पनि नगर्ने खोटा निर्णयहरू पन्त र उहाँका पुत्र-चेलाहरूले गरेका छन् । **लिच्छविसंवत्को निर्णय**को पानापाना चिच्चाएर सो कुरा बोलिरहेका छन् । उदाहरणको रूपमा, त्यस पुस्तकमा पृष्ठ २९३-२९७ परेको श्रीकेरो लक्ष्मण छत्रेले बनाएको अधिमास र क्षयमासको सारणी नै लिन सकिन्छ । यो सारणी सबैभन्दा पहिले **ज्ञानप्रसारक** नामक मराठी पत्रिकाको वर्ष १ अंक २ (सन् १८६०) मा छापिएको थियो । यो सारणीमा उही वर्षको उही महिना (जस्तै शक १८५ कात्तिक) अधिकमास पनि क्षयमास पनि दिइएको छ । यो हुनै सक्तैन । अधिमास र क्षयमास उही महिना कहिल्यै पर्दैन । दोस्रो कुरा, यो सारणी स्पष्टमान अनुसार अर्वाचीन सूर्य सिद्धान्तमा आधारित हुन् । तर यसमा पौषमा पनि अधिमास दिइएको छ । यो पनि सम्भव नभएको कुरा हो । रवर्ट सिवेल र शंकर बालकृष्ण दीक्षितले बनाएको The Indian Calendar मा सूर्य सिद्धान्त तथा आर्य सिद्धान्त अनुसारको सारणीहरू छन् । त्यसमा शक २२९ देखि शक १८२३ (अर्थात् १६०० वर्ष) को स्पष्टमान अनुसारको अधिमास दिइएको छ । तर कुनै वर्षमा पनि पौषमा अधिमास पर्दैन । क्षयमास मात्र पर्दछ ।

## वर्तमान र गत शक

पं. नयराजले अरू इतिहासकारलाई आलोचना गर्ने मूल हतियारको रूपमा प्रयोग गर्नु भएको केरो लक्ष्मण छत्रेको सारणीको अर्को सीमितता छ । यो 'गत' शक अनुसार छ । अर्थात् यसमा शक संवत्को शुरु वर्ष ० देखि हुन्छ । नेपालमा, कमसेकम अशुंबर्मादेखि, प्रयोग भएको संवत् स्पष्टतः वर्तमान शक हुन् । सो कुराको एक ठोस प्रमाण हो अंशुवर्माको निम्न अभिलेख-

**ॐ एकत्रिंशत्तमे वर्षे वर्तमाने स्वसंस्थया**
**माघशुक्लत्रयोदश्याम्पुष्येण सवितुर्दिने**

यो अभिलेख सबभन्दा पहिले छपाउने श्रेय धनवज्र बज्राचार्यलाई छ । तर उहाँले यसको सन्तोषजनक अनुवाद गरेका थिएनन् । यसको शुद्ध अनुवाद हुनुपर्छ

आफैले शुरु गरेको संवत्को वर्तमान (शक) ३१ वर्ष को माघशुक्ल त्रयोदशी पुष्य नक्षत्र आदित्यवार

अभिलेखहरूमा एउटै ऐतिहासिक संवत् पनि कहीं 'गत' र कहीं 'वर्तमान' देखि गणना गर्नुपर्ने उदाहरणहरू फ्राञ्ज कीलहर्नले नेपालसंवत्को ५० अभिलेखको गणना गरेर देखाएका छन् (*The Indian Antiquary* Vol. XVII, September 1888, pp. 246-253) । त्यस्तै उनले नै विक्रमसंवत्को १५० अभिलेखहरू गणना गर्दा सबैजसो 'गत' संवत् नै भेट्टाए पनि ६ वटा 'वर्तमान' गणना अनुसार मात्र मिल्ने देखिए । हेर्नुस् (*The Indian Antiquary* Vol. XIX (January,1890) pp.20-40; (June,1890), pp 166-187; (November,1890), pp 354-374 ) । संवत् १०७ देखि ५३६ सम्मका सबै लिच्छवि अभिलेख 'गत शक संवत्'कै हुन् भन्ने मुर्ख्याई पण्डित नयराजले बाहेक अरू कसले गरेका छन् ? त्यस्तै अंशुवर्माले प्रचलनमा ल्याएका शतस्थानी अङ्क ५०० तष्ट गरी २९ देखि शुरु भएका संवत् ३०१ सम्म पाइएका अभिलेखहरू पनि न जम्मै वर्तमान् शक हुन् न जम्मै गत शक हुन् । यति सामान्य कुराको ज्ञान पं. नयराजमा कसरी भएन आश्चर्य लाग्दो छ । त्यसैले केरो लक्ष्मण छत्रेको सारणी तथा सिवेल र दीक्षितको वर्तमान शकमा आधारित मध्यममान तथा स्पष्टमान अनुसारको सारणी सिधै प्रयोग गर्न मिल्दैन । यो मूर्खतापूर्ण काम गरेर पं. नयराज र उका चेलाहरूले आफ्नो अज्ञानता प्रदर्शित गरेका छन् ।

> चाँगुको अभिलेखको तिथिमितिको गणना मिलायौं भनी सबैले दावी गरेका छन् । यस्ता तिथिमिति सय वर्षभित्र ६-७ बाजि परिरहन्छ । यसकारण यस्ता तिथिमितिका भरमा मात्र कुरो टुङ्गो नलाग्ने स्पष्ट छ । (**लिच्छविसंवत्को निर्णय,** पृ ५५६)

यो कुरा लेख्नेले फेरि ५ पेज पछि यसो लेख्न पुग्छन्:

> मानदेवदेखि शिवदेवप्रथम सम्मका नेपालका लिच्छविराजाहरूका **अभिलेखमा देखिएका संवत्लाई जुनसुकै संवत् माने पनि ती अभिलेखहरूमा देखिएका अधिमास मिलाउन सकिदैंन** । ती संवत्लाई शक संवत् माने मात्र **इतिहासका घटना** टम्म मिल्दछन् । (पृ ५६१)

अनि फेरि दश पेज पछि यसो लेख्न पुग्छन्:

> दोस्रो संवत् **निश्चित भइसकेकोले** पहिलो संवत् पनि शक संवत् सिवाय अर्को हुन सक्तैन भन्ने कुरो निश्चित प्राय छ । **तर त्यसलाई गणितद्वारा सिद्ध गर्न सकिएको छैन** । (पृ. ५७१)

यस्ता थाकेका दिमागका उपजहरूको सिङ्ग न पुच्छरको संगालो नै **लिच्छविसंवत्को निर्णय** हुन् । यसलाई ठोकपिट र तानतुन गरेर अर्का संशोधन-मण्डले 'इतिहासविद्' ज्ञानमणि नेपाल (जसलाई एउटा फूटनोट कसरी लेख्ने थाहा नभएपनि "प्राज्ञ" मानिन्छ र जो चिनियाभाषा वा भोटेभाषा नजाने पनि "भोटविद्" र "चीनविद्" बन्न पुगे) ले जबरजस्ती किताबको रूप दिन खोजे ।

चित्र नं. १



चाङ्गुस्थित नारायणको आसनी तलको सुवर्णपत्रको अभिलेख

चित्र नं. २



सुमतितन्त्रको पृष्ठ २ (क) र पुष्पिका

चित्र नं. ४



गोकर्ण वालुवा महाँकालस्थान वडा नं ७ मा प्राप्त अंशुवर्माको संवत् ५३६ द्वितीयपौषशुक्ल पञ्चमीको अभिलेख

नयराज र उनका चेलाहरूले कसरी र के के पढेर इतिहास प्रवेश गरे भन्ने उनीहरूले लेख्ने गरेका लेख-पुस्तकमा इतिहास-लेखन शास्त्र (Historiography) को बारेमा कुनै पुस्तकको उल्लेख नहुनुले स्पष्ट हुन्छ । कौटल्य र पाणिनि घोक्यो भने इतिहासकार बन्छ भन्ने उनीहरूको दृढ विश्वासले काना देशमा लङ्गडा तन्नेरी भन्ने नेपाली उखानलाई बल जरुर दिन्छ । २००९ साल आश्विन ५ देखि आफ्ना चेलाहरूलाई नेपाली विद्वान्‌हरूको मानमर्दन गर्न विगत ५२ वर्षदेखि (स्वर्गीय प्रिन्सिपल भैरवबहादुर प्रधान, केशरवहादुर के.सी., बालचन्द्र शर्मा, सूर्यविक्रम ज्ञवाली, प्राध्यापक यदुनाथ खनाल, डा. दिल्लीरमण रेग्मी) अहिले सत्यमोहन जोशी, चित्तरञ्जन 'नेपाली' र म लगायत अनेक व्यक्तिहरूको मान-मर्दन गर्ने अभियान चलाए । उहाँहरूको समाजमा प्रतिष्ठा र इज्जतबाट दाह लागेर छिद्रन्वेषणलाई नै आफ्नो प्रमुख पेशा बनाउन सफल नयराज र उनका सुपुत्रहरूलाई थाहा होला छिद्रन्वेषण र अन्वेषणमा फरक छ ।

हेमराज शर्मा वा ऐतिहासिक-शिरोमणि वावुराम आचार्यले वा नयराज पन्तले **सुमतितन्त्र** अनुसार ६४ वर्ष अगाडि केही 'निर्णय' गरे त्यसकारण अरू कसैले यसमा छुनु हुँदैन भन्नु जस्तो पाखण्डी कुरा अरू के हुन सक्तछ ? विज्ञान भन्नु नै निरन्तर खोज र संशोधन हो - निरन्तर परिमार्जन हो । त्यसैले The Royal Society of London को मूल ढोकामा ल्याटिनका तीन शब्द मात्र अंकित छन् Nullius in Verba "कसैले भनेको कुरा भनेर त्यसैमा विश्वास नगर्नु" । मेरो बौद्धिक पालनपोषण यही परम्परामा भएकोले बाबुराम-हेमराज-नयराज प्रवृत्त नेपालका स्वनामधन्य इतिहासकारहरूको प्रारम्भिक शल्यक्रिया गरी पोष्टमर्टम प्रतिवेदन पेश गर्दैछु । इतिहास र खोजको नाममा बाबुरामले के कति वकवास लेखे त्यसको सविस्तार म पछि लेख्दैछु । तर अहिलेलाई खाली महेशराज पन्त नामक स्वनामधन्य विद्वान्‌को केही चर्चा गर्नु उपयुक्त होला ।

## गोपालराजवंशावलीको व्याख्यामा महेशराज पन्तको विद्वत्ता

महेशराज पन्तले **पूर्णिमा** अंक ७२ मा "**द गोपालराजवंशावली** सरसर्ती हेर्दा" भन्ने ६५ पेजको एक समीक्षा प्रकाशित गरे । पं. नयराज पन्तले **लिच्छविसंवत्‌को निष्कर्ष**को "भूमिका"मा इमान्दारीसाथ एक स्वीकारोक्ति लेखेका छन्:

> केशरशमसेरज्यूको पुस्तकालयमा **गोपालराजवंशावली** को फोटो प्रतिलिपिहरू छ, **गोपलराजवंशावली** प्रकाश गर्ने उहाँको विचार छ, तपाईं आफ्ना विद्यार्थीहरूलाई पठाइदिनुहोस्, म कुरा मिलाइ दिन्छु भनी प्राध्यापक इश्वर वरालले वि.सं. २०१६ मा मसँग भन्नुभयो । त्यस अनुसार रामजी, देवीप्रसाद, भोलानाथ, शंकरमान तथा धनवज्र केशर पुस्तकालय गए । प्रत्येक शनिवार उनीहरू त्यहाँ जान्थे । **गोपालराजवंशावली** सबै मिली सारे । **अर्थ गर्न अलि गाहो भएकोले** त्यसबेला सो ग्रन्थ प्रकाश हुन सकेन । (पृ २२)

यसको २८ वर्ष पछि २०४४ साल वैशाखमा प्रकाशित महेशराज पन्तको सो लेखमा यो दुरुह ग्रन्थको १५०० भन्दा बढी शब्द र ४८ पत्र मध्ये वहाँले कति अर्थ गर्न सफल भए भन्ने कुराको एक मात्र मापदण्ड हो । वहाँले कति वाक्य, वाक्यांश, वा शब्दको अर्थ गरे जो घनवज्र वा मैले गर्न सकिन र वा गलत अर्थ गरौं । त्यसमा प्राचीन नेपालभाषाका कति शब्द छन् वा संस्कृत-प्राकृत-देशी भाषाका कति छन् ? सो ६५ पेजको समीक्षामा धनवज्र र मेरो अनेकन दोष-खोट लगाइसकेपछि जब महेशराज आफैले अर्थ गर्न पुग्दछ तब वहाँको बौद्धिक धरातल, भाषिक ज्ञान र अर्थ गर्न सक्ने क्षमता नाङ्गिन पुग्दछ । हामीले अर्थ नगरी छोडेका वा गलत अर्थ गरेका **'बटुकरण'** **'पुष्याभिषेक'** **'भट्टारिका'**, **'निर्जीत्य'**, **'नाभिकमल'**, **'गोग्राम'**, **'भण्डशाला'**, **'अबुथ'**, **'नियोगी'**, आदि जम्मा ९ वटा संस्कृत-प्राकृत शब्द छन् । प्राचीन नेपालभाषाका शब्दमध्ये 'एणिशि' छुटेको, 'तव: क्वलवोस वव' हुनु पर्नेमा 'तव क्वल वास वव' भएको, वारामिहिरको **योगयात्राबाट** 'सुजनस्य पूजा' हुनुपर्ने पाठमा वंशावलीमै 'स्वजन' रहे अनुसार शाब्दिक अर्थ भएको र पत्र ३० (क) पंक्ति २-देखि ५ सम्मका दुई श्लोक मध्ये जम्मा १ पाउको महेशराजले अर्थ लगाउन सफल भए । त्यसैमा विभोर भएर उनी लेख्न पुग्दछ:

> यताबाट, द **गोपालराजवंशावली**का कर्ताहरूले अर्थ नगरी त्यसै छोडेको पुरै पाउको अर्थ स्पष्ट भएको छ । (**पूर्णिमा**, ७२ पृ. ५२) ।

## ज्ञानमणि नेपालको अर्थ्याई

यही क्रममा अर्को महापण्डित ज्ञानमणि नेपालले **गोपालराजवंशावलीमा ग्वलम् भाहस प्रस चोङा** ़को अर्थ पशुपतिनाथलाई 'स्पर्श गरे' भन्ने अर्थ गर्न अघि सरे । त्यस्तै

> **ग्वलंस पछिम द्वारण दुविस्यम् थवालान अङ्काल बिस्यम् स्वान छाया उप्रहाथ पश्चिम द्वारस टया**

को अर्थ

> (जितारि मल्ल) ले पशुपतिनाथलाई अङ्कमाल गरेर पुष्पोहार चढाए, पश्चिम ढोकामा आएर शिरमा हात राखे ।

भन्ने अर्थ लगाए । यस अर्थगराईमा 'उप्रहाथ पश्चिम द्वारस टया' पछिको 'थ्व लिव गाम द्वाको मे चोया', 'प्रस चोङा' वा 'अङ्काल बिस्यं' सँग आएको सहायक क्रियाको अर्थ के त ?

सन्दर्भ अनुसार **अङ्काल**को अर्थ embraced र patronised दुवै लाग्छ । एक शब्दको एउटै मात्रै अर्थ हुन्छ र सन्दर्भको कुनै प्रभाव अर्थमा पर्दैन भन्ने जस्ता वेतुकका कुरा भाषाविज्ञानको क ख ग जान्नेले पनि गर्दैन होला । तर आज यस्तै महापण्डितहरूले प्रज्ञा-प्रतिष्ठानमा संस्कृति-इतिहासको ठेक्का

लिएर हामीलाई अनुसन्धान (त्यो पनि "समाजशास्त्रीय अनुसन्धान") भन्ने चीज नै 'इतिहास संशोधन-मण्डलको **स्थापनापछि मात्र** नेपालमा शुरु भयो' भनेर पण्डित्य झार्छन् ।

## कुँवाको भ्यागुतो ज्ञानमणि र 'नेपाल' शब्दको व्युत्पत्ति

**कैलाश त्रैमासिक** (Vol. VIII, No. 1-2 : 5-28, 1981) मा 'नेपाल उपत्यकाको भाषिक पुरातत्व' नामक एक लेख तथा नेपालभाषामा 'नेपाल खँग्व:या व्युत्पत्ति' (**नेपालभाषा पत्रिका तपँपौ** दँ २६ ल्या: १ (ञँलागा: १, ११००/October 25, 1980) मा **गोपालराजवंशावली**को पत्र १७ (क) र **क्याम्ब्रिज** विश्वविद्यालय पुस्तकालयस्थित **अमरकोश**को ने.सं. ५०६ मा (सन १३८६) पण्डित माणिक रचित **विवृत्तिमा** 'आभीरी' को नेपालभाषा अर्थमा 'नेप शाख' उल्लेख भएको पृष्ठ ५८ (क) को चित्रसहितको आधारमा 'नेपाल' शब्दको अर्थ मैले भोट-बर्मेली **ङहेत्-पा/बा** बाट आएको कुरा प्रतिपादन गरेको थिएँ । यस विषयमा अलि गरिहिएर फेरि सन् १९८१ सेप्टेम्बर २३ मा लेखेर 'Nepala: Archaeology of the Word' शीर्षकमा Nepal Heritage Society को *PATA Conference Souvenir: Nepal Chapter* (1983), pp. 63-69 मा अर्को लेख प्रकाशित गरेको थिएँ । 'नेपाल' शब्द संस्कृत भाषाको जस्तो लागेतापनि यो संस्कृत शब्द होइन । किनभने नेपालका पर्वत, खोलानाला र अन्य स्थाननामहरूमा ८५ प्रतिशत अहिले पनि संस्कृतमूलका देखिंदैन । यो कुरा नापी विभागले १ इन्च = १ माइल स्केलमा तयार गरेको नक्साको आधारमा National Council of Science & Technology, Mapping Sub-Committee ले सन् १९८७ मा तयार गरेको पाँचै विकास क्षेत्रका *Index of Geographical Names of Nepal* Vol. I-V पल्टाएर हेरेमा स्पष्ट हुन्छ । अरू स्थानको नाम जस्तै देशको नाम पनि या त यहाँका जनजातीय नाम हुन् या भौगोलिक विशेषताका ।

ज्ञानमणि नेपालले धनवज्रबाट मेरो लेखका प्रतिलिपी (Offprint) उपलब्ध गरेपछि यसैको खण्डनको रूपमा 'नेपाल' शब्दलाई संस्कृतमूलकै हो र यो शब्द 'नीप' मा 'आल' प्रत्यय जोडेर बनेको हो र 'नीप' भन्ने प्राचीन, संघात्मक-शासनमा संगठित गोपालन पेशामा लागेका आभीर 'गणजाति' को बासस्थान रहेको 'पाखाली भूभाग' को अर्थमा प्रयुक्त हो भनी अर्थ न बर्थका १०४ वटा टिप्पणी सहित एक लेख नोभेम्बर १२, १९८१ मा नेपाल एशियाली अनुसन्धान केन्द्रद्वारा प्रायोजित एक गोष्ठीमा पाठन गरे । सो गोष्ठीमामा एक स्रोता मैले केही टिप्पणी गरेको थिएँ । हुयनचुवाङ (सन् ६२९-४५) ले नेपालको परिधी ४,००० ली दिएकोमा कपिलवस्तु शहर तथा बाराणसी शहरको परिधी पनि उनले ४,००० ली नै दिएका थिए र उ नेपाल आएकै थिएन भन्ने उनका यात्रावलीको फ्रेन्च अनुवाद गर्ने स्तानिस्लाव जूलियन र अंग्रेजी अनुवादगर्ने टमस वाटर्स/स्यामूयल बीलको एकै मत छ । त्यस्तै लिच्छवि नेपाल कत्रो थियो भन्ने कुनै सीमा-सन्धि वा नापीको तथ्याङ्क उपलब्ध छैन ।

लिच्छवि अभिलेखमा ८० प्रतिशत स्थाननाम संस्कृतमा छैनन् भने देशको नाममात्र कसरी संस्कृतमा हुन्छ ? 'नीप' शब्दमा 'आल' प्रत्यय जोडेको हो भन्ने व्युत्पत्ति सन् १८६१ मा नर्वेली भारतविद्

क्रिश्चन लाशेनले 'नीप' (पहाडको फेंदी) र 'नीप' (काम्पिल्यका राजवंश) को उल्लेख गरेकाले ज्ञानमणिको लामो गन्थन कुवाको भ्यागुतोको बासी तर्क मात्र हुन् भनेर टिप्पणी गरेको थिएँ । वहाँले मलाई चुनौती दिंदै 'नेपाल' शब्द भोट-बर्मेली हो भन्ने २०० वर्ष अघिसम्मको प्रमाण प्रस्तुत गर्न सके आफ्नो कार्यपत्र 'यहीं विद्वत-समाजको अगाडि च्यातेर फालिदिन्छु' भनेर आफ्नो फोस्रो विद्वतताको प्रदर्शन गरे । क्रिश्चन लाशनको जर्मन भाषामा ४ खण्डमा प्रकाशित विशाल ग्रन्थ *Indische Alterthumskunde* (**भारतको पुरातत्व**)को भाग १ खण्ड (२) (१८६१) को पृष्ठ ७६ को पादटिप्पणी नं. ६ मा 'हिमाल पाञ्चाल' र यस्तै अरू शब्द झैं 'नेपाल' शब्द पनि **नीप** र **आल** शब्द (**आलय**को संक्षिप्त रूप) का समस्त पद हुन् तथा **नीप**को अर्थ 'पहाडको फेदी' हुनाले पहाडको बेसीमा रहेको बासस्थान नेपाल हो भन्ने संस्कृत व्युत्पत्ति प्रतिपादन गरिसकेका थिए । यसलाई खण्डन गर्दै सिल्भाँ लेवीले *Le Nepal* Vol. II: (1905) p. 66 मा काम्पिल्यका नीप राजवंशको पनि उल्लेख गर्दै 'नेपाल' शब्द कुनै **जनजातिको नामबाट आएको होला भन्ने अनुमान** गरेका थिए । 'नेपाल' शब्द 'नेवार'बाट आएको वा 'नेवार' शब्द 'नेपाल' बाट आएको होला भनी यो शब्द संस्कृत होइन भनी ठोकुवा गरेका थिए (Vol. I: pp.222-223)।

लिच्छविकालीन नेपाल 'विशाल' थियो र यो शब्द संस्कृतकै हो भन्ने ज्ञानमणिको लंगडो तर्क कता पुग्यो सो निक्र्यौल हुन बाँकी नै छ तर ज्ञानमणिको अज्ञानको पर्दाफास दिवाकर आचार्यको यस विषयमा लेखहरू पढे छर्लङ्ग हुन्छ । (हेर्नुस दिवाकर आचार्य 'नेपाल शब्दको व्युत्पत्ति सम्बन्धमा' **गरिमा** वर्ष १७ अङ्क ९ (२०५६ असार) पृ. ६७-७६: 'नीप संघशासक पशुपालक गणजाति होइन', **प्राचीन नेपाल** नं. १४६ (कार्तिक २०५७, पृ. ४२-५१) । 'नीप' हरू आभीर होइनन् भन्ने कुरा बराहमिहिरले आफ्नो **बृहतसंहिता**मा 'नीप' हरू भारतवर्षको मध्यभागमा बस्थे आभीरहरू दक्षिणबासी थिए भन्ने उल्लेख गरेका छन् (अध्याय १४, श्लोक ८-१०) । उनीहरूको छुट्टाछुट्टै उल्लेख गरेकोले एकै जनजाति होइन भन्ने स्पष्ट हुन्छ । त्यसै 'नीप'हरू गणजाति नभई राजतन्त्रात्मक शासनमा संगठित हुन् भन्नेमा कुनै सन्देह छैन । यिनीहरूको नेपाल इतिहाससँग कुनै तादात्म्य छैन भन्ने भनिरहनु पर्दैन होला । अझ हिन्दू पुराणहरू अनुसार 'नीप'हरू त 'शुद्र' 'म्लेच्छ' र 'व्रात्य' थिए भने उनीहरू कसरी राजवंशी भएर नेपालमा स्थापित भए ? हुनसक्छ पाणिनिको **अष्टाध्यायी** रफत गरेका ज्ञानमणिजस्ता कुनै मनिषिले किराँत युगमा यो नाम संस्कृत भाषामा राखिएकोले नेपालमा व्यापक रूपमा जनबोलीसँग घुलमिल हुँदै कौटल्यको **अर्थशास्त्र**मा 'भिङ्गिसि' जस्तै शब्दसाथ 'नैपालकम्' परेको हुनुपर्छ !

आफ्नै सहपाठी धनवज्रलाई उनको देहावसानपछि चरित्रहत्या गर्ने कुत्सित नियतले प्रेरित भएर लेखेको **मेरो गुरुकुलीय शिक्षा र सहपाठी** नामक निकृष्ट किताबमा मैले 'धनवज्रलाई रिडरमा प्रमोशन दिलाई दिएँ, जर्मनी साथ लगें, जापानी प्रोजेक्ट दिलाएर आर्थिक लाभ पुऱ्याएँ, मानार्थ डि.लिट्.को लागि विश्वविद्यालयमा सिफारिस गरें, उनको सिनासमा थन्किएका **मध्यकालीन अभिलेख** र **गोपालराजवंशावली**को प्रकाशनमा सघाएँ' त्यसकारण धनवज्र सिद्धान्तच्यूत भएर म जस्तो संशोधन-मण्डलका कट्टरविरोधीका नाइकेसँग अवसरवादी र द्वैध चरित्र लिएर सर्मपण र विसर्जनमा लागे ।

पञ्चायत दर्शनका व्याख्याकारमा दरिएका योगी नरहरिनाथ र इन्द्रप्रसाद काफ्ले जस्तै बने । ज्ञानमणिको निर्वाद सिनास प्रवेश, प्रमोसन, विश्वविद्यालयमा स्थायी नोकरी र अनुसन्धानात्मक कृति प्रकाशन र त्यसबापत पाउने रोयाल्टीमा बाधकको रूपमा धनवज्रलाई उभ्याई मलाई त्यस कपोलकल्पित नाटकमा खलनायक देख्ने ज्ञानमणिले सोंच्नुभएहुन्थ्यो - वहाँका पूज्य गुरुलाई कसको संयोजकत्वको टोलीले २०३६ बैशाख १ मा प्रज्ञा-प्रतिष्ठान प्रवेश गराए र कसको सिफारिसमा **सुमतितन्त्र** आलेखन, सम्पादन र अनुवाद गर्ने परियोजना पाए, कसको सिफारिसमा महाविद्यावारिधी पाए ।

भोजपुरको गोगने पाठशालाबाट 'मध्यमासम्म पढेपछि ठूला पण्डित ठहरिने' पृष्ठभूमिबाट **मध्यकौमुदी** सिध्याएर 'धुरन्धर विद्वान् बन्ने प्रवल आकांक्षा बोकेर' २००८ साल माघको जाडोयाममा काठमाडौं उपत्यका ओर्लेर बल्ल २०३५ सालमा प्राध्यापक डोरबहादुर विष्टले त्रिभुवन विश्वविद्यालयमा 'औपचारिक शिक्षा विना उप-प्राध्यापकको तहमा' ज्ञानमणिलाई सेवा प्रवेश गराउन मसँग राय माग्दा मैले विष्टलाई सोधेको थिएँ 'कुन विषयको उप-प्राध्यापक ? सो विषयमा वहाँको के-के प्रकाशनहरू छन् सम्बन्धित विशेषज्ञसँग मूल्याङ्कन गराई लिए हुन्छ' भन्ने अनुमति दिएको थिएँ । त्यसबेलासम्म उहाँको आफ्नै प्रकाशन पुस्तककारमा २०१९ सालमा प्रकाशित ७४ पृष्ठको **नेपालको प्राचीन इतिहासमा नयाँ प्रकाश** नामक एक पुस्तिका बाहेक अन्य उल्लेखनीय केही नदेखिएकोले डोरबहादुर विष्ट ज्ञानमणिलाई उप-प्राध्यापक दिंदा संस्कृत, नेपाली वा इतिहास कुन विषयको करारमा लिने भन्ने विषयमा अन्यौलमा थिए । सो पुस्तिकामा शूद्रकका वास्तविक नाम इन्द्राणीगुप्त हो र अस्मकदेश (दक्षिण भारत)मा सन् ४५ मा राजाको रूपमा उनले एक संवत् चलाए र सो संवत् शक २४७ सम्म अर्थात् सन् ३२५ सम्म **नेपालमा पनि चलेको** थियो भनी १० पेज लामो गन्थन गरी टुङ्गिएको थियो ।

ज्ञानमणि कति तल ओर्लन सक्छ भन्ने कुराको सबभन्दा दह्रो प्रमाण उनको 'आत्मकथा'मा व्यक्त म र धनवज्रप्रतिको तिक्तताले नङ्ग्याएको छ । धनवज्रलाई प्रोत्साहन दिएँ र उनको त्रि.वि.सेवा आयोगले रिडरमा प्रमोशन मेरो निगाहले भयो वा मैले सिफारिस गर्दैमा वहाँलाई मानार्थ डि.लिट् विद्या-परिषद् र प्राज्ञिक-परिषद्ले 'खुरुक्क' दिइहाल्छ वा मैले सिनासमा 'घोर आपत्तिजनक नियम' बनाएँ भन्ने जस्ता बकबास गरेकाले स्पष्ट हुन्छ । धनवज्रको प्रोजेक्ट-प्रतिवेदन **डाइरेक्टरको स्वीकृत विना सिनास बाहिर लगेर प्रकाशन गरेपनि** मेरो अगाडि कार्यकारी-निर्देशक कुमार खड्गविक्रम शाहले 'केही बोलेन' वा सो परियोजनाबाट धनवज्रले दुईतिरबाट आर्थिक लाभ गरे भन्ने जस्ता निकृष्ट झूठ लेख्नेले मजस्तो 'विवादास्पद र संशोधन-मण्डल विरोधी'लाई कुमार खड्गविक्रमले *Contributions to Nepalese Studies* मा प्रधान-सम्पादकको रूपमा 'भत्ता सुविधा सहित' नियुक्त गऱ्यो भन्ने नितान्त झूठो कुरो लेख्दा आश्चर्य मान्नु पर्दैन । सिनासको रिसर्च कमिटीमा त म २० वर्ष अगाडिदेखि, सन् १९७४ बाट नै थिएँ र यसको कार्यकारी-निर्देशक पदको लागि मेरो नाम सन् १९७६ मा नै राष्ट्रिय शिक्षा समितिमा सिफारिस भएको थियो । *Contributions to Nepalese Studies* मैले ६ वर्षसम्म मानार्थ प्रधान-सम्पादकको रूपम काम गरी १४ अंकसम्म सम्पादन गरेको थिएँ । **गोपालराजवंशावली** अंग्रेजीमा प्रकाशन वापत धनवज्र र मैले जिन्सी/नगद 'फाइदा'को रूपमा जनही सो पुस्तकको १०/१० प्रति पाएका थियौं । नेपाल रिसर्च सेन्टरले (रु. ५४,०००/- लागत परेको) सो पुस्तक हजारप्रतिमा ९५० प्रति हिमालयन बुक्स सेन्टरका शिवराम

श्रेष्ठलाई प्रति पुस्तक रु. ९०/- मा सम्पूर्ण स्टक विक्री गरेका थिए । त्यसको रोयल्टी न मैले न धनवज्रले १ पैसा पाएँ ।

सो ग्रन्थ कति दुरुह छ भन्ने अन्दाज ऐतिहासिक-शिरोमणि बाबुराम आचार्यको निम्न उक्तिबाटै स्पष्ट होला:

> **गोपालराजवंशावली** बाह्र वर्ष पढ्दा पनि थोरबहुत मात्र बुझियो । (**नेपालको संक्षिप्त वृतान्त**, खण्ड १, २०२२ चैत्र, प्रस्तावना, पृष्ठ ४)

महेशराज पन्तहरू यस ग्रन्थको अनुवादको बारेमा कति पूर्वाग्रही थिए भन्ने कुरा निम्न उद्धरणले स्पष्ट पार्छ:

> अंग्रेजी र नेवारीमा अखबारी लेख लेखर हिड्ने गरेका कमलप्रकाश मल्ले ९ वर्ष जति अघि नेपालको इतिहासको संबन्धमा कलम चलाउन थालेका भए पनि **प्रथमग्रासे मक्षिकापातः** भने झैं भरमार अशुद्धि गर्न उनी पुगेका र अहिलेसम्म पनि उनको ज्ञान खास बढेको नदेखिएकोले सम्पादकको रूपमा उभिन पुगेका दुवै जनाको योग्यताबाट सेसिल वेन्डल, बाबुराम आचार्य, ल्यूच्यानो पेटेक वा एक गठ भइरहेका संशोधन-मण्डलका सदस्यं जस्ता ऐतिहासिकहरूले सम्पादन गर्न आँट नगरेको **गोपालराजवंशावली** जस्तो दुरुह ग्रन्थको सम्पादन राम्रोसँग कसरी हुन सक्ला भन्ने मलाई त्यतिबेला लागेको थियो । ...... मैले अनुमान गरेभन्दा पनि निकै तल्लो तहको यो पुस्तक प्रकाशित भएको रहेछ भन्ने मलाई लाग्यो । (महेशराज पन्त, 'किन म यस पुस्तकको प्रकाशक बने ?' **पशुपतिनाथको दर्शन स्पर्शन र पूजन सम्बन्धमा समीक्षा** लेखक ज्ञानमणि नेपाल । काठमाडौं, २०४३, पृष्ठ २) ।

जम्मा ४५ पृष्ठको निबन्ध **पशुपतिनाथका दर्शन स्पर्शन र पूजनमा** ३० पेजको 'भूमिका', ४१ पृष्ठको 'टिप्पणी', २० पृष्ठको 'परिशिष्ट' र ११ पृष्ठको आफ्नो लेखसूची तथा ७ पृष्ठ लामो 'शुद्धि-पत्र' सहित जम्मा १५४ पृष्ठमा **गोपालराजवंशावली** कै जम्मा ३ शब्दको अर्थ खुट्याउने असफल प्रयास ज्ञानमणिले गरेका छन् । त्यसमा संस्कृत शब्द 'सम्भव' को अर्थ 'हुनु' मात्रै हुन्छ अरू अर्थ हुँदै हुँदैन जस्तो ( जस्तै: यस शब्दको अन्य १२ अर्थ मध्ये 'सहवास' हुँदैन) भन्ने बकवास लेख्न पुगे । **अमरकोश** रफत गरेर पचाएका ज्ञानमणिलाई त थाहा हुनपर्ने एकै शब्दका कति 'नानार्थ' हुन्छन् ।

सन् १९९३ अक्टोवर १२-१३ मा त्रिभुवन विश्वविद्यालय केन्द्रीय इतिहास विभागको तत्वावधानमा 'नेपालमा इतिहासलेखन शास्त्रको स्थिति' विषयमा एक अन्तर्राष्ट्रिय गोष्ठी भएको थियो । सो गोष्ठीमा उक्त विभागका प्रमुख प्राध्यापक डा. तुल्सीराम बैद्यको 'प्राचीन तथा मध्यकालीन नेपालको इतिहास-लेखन शास्त्र' विषयक प्रस्तुत मिमोग्राफ कार्यपत्र अनुसार:

> This translation (of the *Gopalarajavamsavali* by Dhanavajra Vajracharya and Kamal P. Malla) is a landmark for the historiography of Nepal ...... Kamal P. Malla, Co-editor and translator in English Language of the Vamsavali, has proved himself as one of the most meticulous research scholars while writing the Introduction of the *Gopalarajavamsavali.* Prof. Malla's intellectual sharpness has manifested itself, not only in his own subject (English Language, Literature and Linguistics), but also in Nepalese history. His 'Introduction' in the *Gopalarajavamsavali* is a concrete evidence of his versatile and wide knowledge about the historiography of Nepal. (p.18)

हामीमाथि सबै किसिमका खोटहरू लगाउँदा पनि नपुगेर महेशराज यतिसम्म लेख्नपुग्छन्:

> विद्याको क्षेत्रमा नसुहाँउने **दाउपेच गरी सो पुस्तक निकालिएको** देखेर मलाई निकै नमज्जा लग्यो । (**पशुपतिनाथको दर्शन**, पृ. २)

ज्ञानमणि स्वयम्ले २०५३ चैत्र ६ र ७ मा प्रज्ञा-प्रतिष्ठानमा आयोजना गरेको समाजशास्त्र सम्बन्धी एक गोष्ठीमा फेरि प्राध्यापक तुल्सीराम वैद्यको कार्यपत्रमा **गोपालराजवंशावली** को बारे यस्तै सकारात्मक मूल्याङ्कन भएपछि एक टिप्पणीकारको रूपमा दिनेशराज पन्त यति भन्न बाध्य भए:

> **गोपालराजवंशावली**को 'पूर्णअनुवाद' भनेको ठाउँमा चाहिँ 'पूर्ण अनुवाद हुन नसके पनि सम्पादन कार्य राम्रो भएको छ' भन्ने कुरा थप्नु पर्ला । (**प्रज्ञा** अङ्क ८५, असार-माघ २०५४, पृ.१०९)

आफ्नो आङमा भैंसी दौडेको नदेख्ने तर अर्काको टाउकोमा लिखा टिप्न जानेहरूबाट यति पो के आश गर्नु ? हाम्रो सम्पादन र अनुवादको यथार्थ मूल्याङ्कनको लागि ख्यातिप्राप्त निम्न अन्तर्राष्ट्रिय जर्नलहरूमा सो पुस्तकको समीक्षा हेरे स्पष्ट हुन्छ ।

- *Zentralasiatische Studien* 19 (1986) : 288-289 (Karl-Heinz Golzio, Leipzig)
- *Bulletin of the School of Oriental and African Studies* Vol. L: 21 (1987):390 (Michael Hutt, London)
- *Acta Orientalia* Vol. XLIX (1988) : 180-183 (Linda Iltis, Washington)

ज्ञानमणिको कुनै 'मत' खण्डन गर्नासाथ दिवाकर आचार्यको लेख 'कि त प्रायोजित हुन सक्छन् कि कसैको स्वार्थपूर्ति गर्न सक्छन् । स्वदेशी वा विदेशी प्रभु रिझाउन पनि सक्छन् । तर विधाविषयक कार्यमा बल थप्न चाँहि कदापि सक्दैनन् ।' 'नेपालको व्यत्पत्ति: बराला उपपत्ति' **गरिमा** पूर्णाङ्क २५६ (चैत्र २०५८) पृ. १२६ भन्ने भनाईबाट स्पष्ट हुन्छ ज्ञानमणिको प्राज्ञिक स्तर ।

शुरुदेखि सन् २००१ सम्म सिनासले जम्मा १३९ पुस्तक तथा प्रतिवेदनहरू प्रकाशन गरेको देखिन्छ । कुन कार्यकारी निर्देशकको समयमा के कति इतिहास-संस्कृतिमा परियोजना सकाएर प्रतिवेदनहरू

पुस्तकको रूपमा निस्के तुलना गरे थाहा भइहाल्छ । स्व. कुमार खड्गविक्रम शाह (कार्यकाल १९८३ डिसेम्बर देखि १९९० सम्म) तथा हामी सिनासका 'बाहिरीयाहरू' (जस्तै डा. हर्क गुरुङ्ग, डा.लोकराज बराल, प्रा. उपेन्द्रमान मल्ल, योजना आयोगका उप-सचिव रामबहादुर क्षेत्री, अर्थ उप-सचिव, शिक्षा उप-सचिव र म लगायत) ले त्यस प्रकाशन प्रकृयामा के र कहाँ 'आपत्तिजनक हस्तक्षेप' गरे अनुसन्धान सल्लाहकार समितिको अर्धबार्षिक बैठकको अभिलेख हेरे स्पष्ट हुन्छ ।

## धनवज्रको परिवेश र 'माघवर्ष'

धनवज्र मैले बोक्नुपर्ने विद्वान होइन, न मसँग सबै कुरामा सहमत जनाउने नै हुन् । यथार्थमा सन् १९८२ डिसेम्बरदेखि मदेखि वहाँ प्रसन्न थिएन । किनभने नेपालभाषा शब्दकोष निर्माण परियोजनाको अवैतनिक प्रमुखमा हामीले वहाँलाई चयन नगरी प्रेमबहादुर कंसाकारलाई सर्वमान्य रूपमा राखेका थियौं । त्यसैले नवम्वर १५, १९८१ पछि वहाँले सो समितिबाट राजीनामा दिनुभएको थियो । **गोपालराजवंशावली**को अनुवाद र प्रकाशनमा वहाँको सहभागिता न्यून थियो । यतिसम्म कि मैले वहाँलाई भूमिका लेख्न अनुरोध गर्दा वहाँ मान्नुभएन । संस्कृत-नेपाली खण्डको प्रूफ संशोधनको जिम्मा लिएका वहाँले मन लगाएर काम गर्नुभएको देखिएन । कसैबाट यसको ध्वंशात्मक आलोचना हुँदैछ भन्ने कानमा परेपछि मात्र वहाँले २ पृष्ठको 'शुद्धिपत्र' तयार पार्नुभयो ।

धनवज्रको शिक्षा-दीक्षा र बौद्धिक परिवेश मेरोभन्दा नितान्त फरक थियो । त्यसैले हाम्रो सोंचाईको Wave Length उही हुन सक्दैनथ्यो । 'मानदेवसंवत्'को उल्लेख गर्ने पक्षमा म छँदैथिएन । तर धनवज्रले आफ्नो गुरुको 'निर्णय' मा अडिग र अटल विश्वास गर्थे । वंशावली अनुवाद-परियोजना बीचैमा तुहिने स्थितिमा मैले सो संवत्को अगाडि (?) प्रश्न चिन्ह सहित उल्लेख गर्ने निधो गरें । त्यतिसम्म पनि वहाँलाई मान्य भएन । यस्तै वहाँकै **लिच्छविकालका अभिलेख**को अभिलेख संख्या १ 'चावहिलको अभिलेख'मा उल्लेखित **माघवर्षे काले आषाढशुदि १० अस्यान्दिवसपूर्वायाम्** शब्दावलीको अर्थ सप्तऋषिकालको माघ वर्ष (सन् २२५) को वर्ष (९) काल (३) अर्थात् २२५+९३ = सन् ३१८ को हो र **अस्यान्दिवसपूर्वायाम्** भन्ने वाक्यांश महाराज हस्तिन्को गुप्तसंवत्मा उत्कीर्ण संवत् १५६, १६३, १७०, १९१, १९९ र २०९ मा पनि आएको छ भन्ने कुरा सूचीत गरेको थिएँ ।[3] वहाँले सो कुरालाई कुनै महत्त्व दिनुभएन सो अभिलेख गुप्तसंवत्को हुनसक्ने धेरै संभावनालाई पनि वहाँ नकार्नुहुन्थ्यो । सो अभिलेखको छैठौं पंक्तिको वहाँको पाठ **शोककाममय** होइन, किन्नरीजातकको **कोककाममुख** पात्र हो भन्ने अहिले स्पष्ट भएको छ । यही ढिपी वहाँको अंशुवर्माको **वर्तमान संवत् ३१** र **स्वसंस्थाया** शब्दावलीको बारेमा पनि थियो ।

---

[3] We can distinguish four general calendaric systems in use in India between the second century B.C. and the fifth century A.D. The Yavanas, Sakas, Pallavas, and the Kusana of the northwest represent one tradition; the Sakas and Kusanas in the Yamuna and Ganga Valleys a second; and **the indigenous Indian dynasties a third**. The fourth system, that which became eventually standard throughout India, was introduced, also with an astronomy adequate to regulate it, by the Ksatrapas of Ujjaini. (Pingree, "A Note etc." p. 359).

गुरुबचन नै अकाट्य ऋषिबचनतुल्य हो ठान्ने धनवज्र एकातिर थिए भने हरेक लिपिबद्ध शब्द विश्वसनीय हुँदैन भन्ने मेरो परिवेशमा धेरै वैषम्य रहेपनि **गोपालवंशावली**को सर्वाधिक महत्त्वलाई ध्यानमा राखेर म वहाँसँग सहकार्यमा जुटेको मात्र थिएँ । यो कसैको विरुद्ध कुनै अपवित्र गठबन्धन थिएन ।

> अनुसन्धानात्मक कृति तयार पार्नुपर्ने प्रकाश गर्नुपर्ने **बाध्यता** हामीलाई (धनव्रज र ज्ञानमणि) मात्र थियो । माधवराजको पालासम्म पनि अनुसन्धाकर्ताले स्वीकृत **परियोजना प्रतिवेदन तयार पारेर बुझाउने बित्तिकै पुस्तक प्रकाशनार्थ प्रेसमा पठाइन्थ्यो ।** (पृ. १२८) तीन वर्षभन्दा बढी कसैको पुस्तक थन्काएर राखिदैनथ्यो । (?) अब त्यो पनि रोकियो । सिनासबाट छापिएका कृतिबाट अनुसंधानकर्तालाई दिइएको रोयल्टी रोक्का गरियो, ...पचासप्रतिशत भत्ता कटौती गरियो । स्वतन्त्रविचारकहरूलाई हतोत्साहित गरी तिनका कृतिलाई प्रकाशमा आउन नदिने, अनुमतिनै नदिने दिएमा पनि लिएको रकम फिर्ता लिने जस्ता अत्यन्त अनुदार घोर आपत्तिजनक नियम... बनाए ।" (पृ. १२८)

यो सबैको दोष कमलप्रकाश मल्ल जस्ता सिनास 'बाहिरबाट आएका'लाई दिने र २०३५ साल 'उप' बाट करारमा छिरेको ज्ञानमणि जस्ता चाहिँ विश्वविद्यालय परिसरमा 'भित्रिया' ठहऱ्याउने नै त्यस निकृष्ट पुस्तकको मूल ध्येय देखिन्छ । एउटै पुस्तक (**पूर्वमध्यकालीन राजनैतिक इतिहास**) सिनास र प्रज्ञा-प्रतिष्ठानबाट छपाई दुवैबाट पैसा असूल्ने दाउ असफल ज्ञानमणिलाई काठमाडौंमा मात्रै 'प्राज्ञ' भन्न सुहाउँछ ।

त्यसैले ज्ञानमणि आदिले पं. नयराजको गुरुकुलबाट कुनस्तरका शिक्षा पाएका थिए भन्ने सहजै अनुमान गर्न सकिन्छ । पाँच जना स्तानक मध्ये २ 'वृत्तिको लागि 'बौद्धिक लाहुरे' बने । 'बाँकी ३ जनाको पनि ३ तिर मुख फर्किएको हुँदा संघटनमा आउने संशोधन-मण्डललाई अघि बढाउँदै आफ्नो छवि फैलाउने कुरामा विल्कुल असक्षम बनेका थियौं ।' (**मेरो गुरुकुलीय शिक्षा**, पृष्ठ १०६)

## गोकर्णको संवत् ५३६ को अभिलेखको महत्त्व

२०४६ फाल्गुणमा गोकर्ण बलुवा गाउँ विकास समिति महाङ्काल स्थानमा अंशुवर्माको संवत् ५३६ द्वितीयपौषशुक्ल ५ को अभिलेख प्राप्त भए । सो अभिलेख **रोलम्बा** वर्ष १० अंक १ (जनवरी-मार्च १९९०, पृ.३४) मा प्रकाशित भए । त्यसपछि प्राचीन नेपालमा प्रयोग भएका संवत्हरूको बारेमा उपलब्ध प्रमाणहरूको समीक्षा र पुनर्मूल्याङ्कन गर्नुपर्ने नितान्त आवश्यकता मैले महसुस गरें । शुरुदेखिनै नयराज/पेटेकहरूको पछि लागेर म पनि शकसंवत् ४९८ बाट शुरु भएको 'मानदेवसंवत्' कै अनुयायी थिएँ । सोही अनुसारको गणना र कालक्रम आफ्ना सबै लेख/अन्तरवार्तामा प्रयोग गर्थे । सिल्वाँ लेवीले सन् १९०५ मा प्रकाशित आफ्नो ग्रन्थमा शकसंवत्मा ८०० तष्ट गरी फेरि १ देखि नेपालसंवत् (सन् ८७९ अक्टोवर २० मंगलबार) चलेको थियो भन्ने मत व्यक्त गरे । गत शक ८०१ र ७ महिनापछि कार्तिकशुक्ल

प्रतिपदाको दिन सो संव्त शुरु भएको थियो । यही विचारबाट प्रेरित भएर सन् १९४५ मा भारतीय इतिहासकार रमेशचन्द्र मजुमदारले अंशुवर्माले पनि शकसंव्त ५०० तष्ट गरी संवत् २९ देखि एक "लोककाल" चलाए भन्ने मत व्यक्त गरेका थिए (मजुमदार, १९४५, पृ. ६२६-६४१) । सोही मत अनुसार सन् १९६५ मा अर्का वरिष्ठ भारतीय पुरातत्वविद् दिनेशचन्द्र सरकारले लेखिसकेका थिए (सरकार, १९६५, पृ. २७१, पादटिप्पणी २ र पृ. २९७) । गीकर्ण बलुवा गाउँको संवत् ५३६ को अभिलेखले सो विचार सही हो भन्ने प्रमाणित हुन्छ । फरक यति मात्र छ कि नेपालमा प्रचलित शकसंवत् 'गत' होइन । यसको गणना सन् ७८ मार्च ३ बाट हुँदैन । यो 'वर्तमान' वा 'प्रवर्त्तमान' शक हो । यसको गणना सन् ७६ अक्टुवर २० बृहस्पतिबारबाट हुन्छ किनकि यो कात्तिकादी हो । त्यसैले कार्तिकादि 'प्रवर्त्तमान' शक र चैत्रादि गत शक संवत्बीच एक वर्ष ५ महिनाको अन्तर हुन्छ ।

अंशुवर्माले आफू सत्तामा आएपछि संव्त २९ देखि ५०० तष्ट गरी संवत् प्रयोगमा ल्याउनु पछाडि के हेतु होला भन्ने प्रश्न स्वभाविक हो । सन् ६०६ मा भारत थानेश्वरका हर्षबर्द्धनले आफ्नो राज्यरोहणसँगै कार्त्तिकादि हर्षसंवत् शुरु गरेका थिए । यसै संवत्सँग समकक्ष र रूपान्तरण गर्न र संभवत हर्षवर्द्धनको धर्मसभापछि यसैबाट प्रेरित भएर अंशुवर्माले ५२९ बाट ५०० तष्ट गरी २९ बाट गणना गरी शुरु गरेको प्रतीत हुन्छ । यसको प्रमाणस्वरूप अंशुवर्माको संवत् ३१ को चाँगुनारायणको आसनको अभिलेख प्रस्तुत गर्न सकिन्छ । त्यसमा ॐ **एकत्रिंशत्तमे बर्षे वर्तमाने स्वसंस्थया** भन्ने स्पष्ट शब्दावली परेको छ । यस मतको ठोस आधार र ठोस सवूदप्रमाण गोकर्ण वलुवा गाउँ महाङ्काल स्थानको अंशुवर्माकै संवत् ५३६ द्वितीयपौषशुक्ल ५ को अभिलेख हो । त्यसबाट केही वर्षसम्म अर्थात् (५)२९ देखि ५३५/३६ सम्म दुइटै परिपाटीका संवत् साथै चलेको देखिन्छ । यस कुराको सन्तोषजनक व्याख्या गर्न नसकेर १९ औं सदीको उत्तरार्द्धमा पण्डित गुणानन्द शाक्यले संकलन गरेको (तथा डेनियल राइटले सम्पादन गरेको) एक थरी **भाषावंशावली**मा अंशुवर्माकालीन संवत् ४४ को वन्ताहिटी टुडिखेलको विभुवर्माको अभिलेखको पाठ दिएर लगत्तै पछि यसो लेख्न पुगेको देखिन्छ:

> Some continued to use Vikramjit Sambat, and others out of deference to the Raja's wishes, used the Salivahana Saka. (p. 134)

## उपसंहार

अन्त्यमा, लिच्छविकालका २०० भन्दा बढी अभिलेखहरू प्राप्त भए पनि २ वटामा मात्र बार परेकोले सो दुवै अभिलेखहरूको गणना मैलै ५ उपकरणहरू र त्यसमा दिइएका सारणीहरू प्रयोग गरेर जाँचेको छु । मेरो गणना मूलत: Hermann Jacobi को "The Computation of Hindu Dates in Inscriptions etc. को आधारमा परीक्षण गरेका हुन् । (हेर्नुस् John Fleet, *Epigraphia Indica*, Vol. I, (1892) pp. 403-460) ।

मेरो गणना अनुसार (वर्तमान) संवत् ३१ माघशुल्क १३ आदित्यबार पुष्य नक्षत्र भनेको जूलियन

पात्रो अनुसार AD 608 February 4 तारीख हो । त्यो दिन काठमाडौंमा मध्यम सूर्योदयपछि त्रयोदशी तिथि १३ घण्टा ३० मिनेटसम्म र पुष्य नक्षत्रमा चन्द्रमा २ घण्टा १५ मिनेट सम्म थियो ।

त्यस्तै संवत् ३०१ बैशाख शुक्ल ७ आदित्यबार पुष्य नक्षत्र भनेको जूलियन पात्रो अनुसार AD 878 April 13 तारिख हो । त्यो दिन काठमाडौंमा मध्यम सूर्योदयपछि सप्तमी तिथि १२ घण्टा २४ मिनेटसम्म थियो र चन्द्रमा पुष्य नक्षत्रमा १३ घण्टा २८ मिनेट सम्म थियो । आइतवार चन्द्रमा पुष्य नक्षत्रमा रहेकोले सिद्धयोग परेको थियो ।

१. 'मानदेव संवत्' दन्त्यकथा हो इतिहास होइन । प्राचीन नेपालमा 'मानदेव द्वितीय' भन्ने नामको न कुनै महासामन्त थियो न कुनै लिच्छवि राजा ।

२. **सुमतितन्त्र**को आधारमा शक ४९८ मा नेपालमा 'मानदेवसंवत्' ३०४ वर्षसम्म चलेको थियो भन्ने निर्णय खोटो हो । प्राचीन नेपालमा दुई थरी संवत् चलेका थिएनन् । अंशुवर्माले शतस्थानी अंक तष्ट गरी ५२९ लाई २९ गरेर प्रयोगमा ल्याएका एक 'लोककाल' हुन् । नेपालमा चलेको शकसंवत् मूलत: 'वर्तमान' हो जसको गणना कार्तिकादि अमान्तमान अनुसार हुन्छ । इस्वी संवत् अनुसार कार्तिकदेखि पौष सम्म ७६ र त्यस पछि ७७ जोड्नु पर्दछ । सन् ७६ कार्तिक शुक्लप्रतिप्रदा देखि यो संव्त शुरु भएको हो । भारतीय शकसंवत् भन्दा यो संवत् १ वर्ष ५ महिना पहिलेबाट गणना गर्नुपर्दछ ।

३. प्राचीन नेपालमा भारद्वाजको मध्यममान मत अनुसार अधिमास मनाइन्थ्यो । स्पष्टमान अनुसार अधिमास मानेको प्रमाण नेपालसंवत् ५७७ नष्ट कार्त्तिकशुक्ल २ भन्दा पहिले पाईदैन । त्यसैले अधिमासको आधारमा अभिलेखमा प्रयुक्त संवत् कुन हो भन्ने निर्णय गर्नु असम्भव छ । शकसंव्त, संक्षिप्त शकसंवत् तथा नेपालसंवत्को ५७७ वर्षसम्म (याने सन् ७६ देखि सन् १४५६ सम्म) चलेका संवत्मा एकै परिपाटीको अधिमास मनाउने चलान थियो । त्यसैले नयराज पन्तको **लिच्छविसवंत्को निर्णय** एक निरर्थक पाखण्डी अभ्यास मात्र हो ।

४. **सुमतितन्त्र**मा उल्लेखित कालक्रम तथा संवत्हरू इतिहास-सम्मत होइनन् । कपोलकल्पित हुन् । कलिआरम्भदेखि ग्रन्थआरम्भसम्म जोडेर अहर्गण ल्याउन यहाँका ज्योतिषहरूले थरीथरी संवत् जोडेर नेपालसंवत् १ सम्म पुऱ्याइएका मात्र हुन् । नन्दराजसंवत् वा शूद्रकराजसंवत् वा चन्द्रगुप्तसंवत्को उल्लेख न भारतीय इतिहास न नेपाली इतिहासमै उपलब्ध छ ।

५. 'सागरसंवृत्त कन्याद्वीप' भनेको भारतवर्ष हो, नेपालमण्डल होइन । मेषादि मिथुनान्त चरप्राण, अक्षांश २७ डिग्री र देशान्तर (उज्जयिनीबाट १ घडी ५८ पला) यहाँकै ज्योतिषहरूले थपेको हुनुपर्दछ । उज्जयिनीबाट काठमाडौंको देशान्तर १ घडी ३६ पला (अर्थात् ४८ मिनेट) मात्र छ । तर यहाँ दिइएको देशान्तर झण्डै ५८ मिनेटको देखिन्छ । त्यसैले पनि यो थपुवा हो भन्ने प्रमाणित हुन्छ ।

६.	क्विलोन, त्रिवन्द्रम्का राजज्योतिषी शङ्करनारायण (सन् ८२५-९००) ले भास्कर प्रथमका **लघुभास्करीय** माथि लेखेका **विवरण** (सन् ८६६) मा आचार्य सुमतिको उल्लेख आएको छ । आर्यभटीय आर्द्धरात्रिक पक्षलाई लाटदेवले संशोधन गरेको प्राचीन ग्रन्थको आधारमा आचार्य सुमतिले **सुमतितन्त्र** रचना गरेको पात्रो बनाउने ग्रन्थ भन्ने स्पष्ट छ । यसमा कथित 'मानदेवसंवत्' ३०४ (सन् ८००) उल्लेख हुनु स्वत: थपुवा ठहर्छ । यसमा दिइएका ग्रह-स्थिति तथा ग्रह-गति (Astronomical Constants/ Parameters) सबै सन् ५०५-५५० तिरका हुन् ।

## सन्दर्भ-सूची

**बाबुराम आचार्य र उहाँका कृति** सं. धनवज्र वज्राचार्य र साकेत विहारी ठाकुर (कीर्तिपुर : नेपाली एशियाली अध्ययन संस्थान,२०२९ साल, फाल्गुण २९)

आचार्य, बाबुराम, 'नेपालका लिच्छवि-राजाहरूको कालगणना (प्रस्तावना)', **शारदा** (मासिक), १९९६, फाल्गुण । पृ. ३३२-३३६ ।

**प्राचीनकालको नेपाल (सभ्यताको आरम्भदेखि सन् ८७९ सम्म)** । २०६० फाल्गुण ।

ज्ञानमणि नेपाल, **नेपाल निरुक्त** । काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, २०४० ।

'इतिहास लेखक प्रमाणले कि आफ्नो अनुकुल कल्पनाले' **रुखरेखा** वर्ष २६, अङ्क ४ (२०४२) पृ. ३-२२ ।

**पशुपतिनाथको दर्शन स्पर्शन पूजनसम्बन्धी समीक्षा** । काठमाडौं: महेशराज पन्त २०४३ ।

"कोशार्थ निरूपण" **प्रज्ञा** अङ्क ६५ (२०४५ माघ) पृष्ठ ८०-१०१ ।

**मेरो गुरुकुलीय शिक्षा र सहपाठी** काठमाडौं: ज्ञानगुण प्रकाशन, २०५४ ।

दीक्षित, शंकर बालकृष्ण । **भारतीय ज्योतिष** । लखनऊ : सूचना विभाग, उत्तरप्रदेश हिन्दी समिति, १९६३, द्वितीय संस्करण । मराठीबाट हिन्दी अनुवाद, शिवनाथ झारखण्डी ।

पन्त, दिनेशराज, **देशय्मरु झ्या** : मंसिर २७ देखि फागुन २, २०५३ सम्मका अङ्कहरू र बैशाख १२ र १९, २०५४ ।

**नेपाल समाचारपत्र**, जेष्ठ ४, २०५४ ।

पन्त नयराज, देवीप्रसाद भण्डारी र केशवचन्द्र न्यौपाने । **लिच्छविसंवत्को निर्णय** । काठमाडौं : नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान, २०४३ ।

पन्त, नयराज, देवीप्रसाद भण्डारी र दिनेशराज पन्त । **सुमतितन्त्रम्** (प्रथमो भाग:) । कीर्तिपुर : पाठ्यक्रम विकास केन्द्र, त्रिभुवन विश्वविद्यालय, २०३५ ।

पन्त, महेशराज 'सुमति को हुन् ?' **पूर्णिमा** ५९ (२०४२ माघ), पृष्ठ २४-२६ ।

**नेपालसंवत्को राष्ट्रिय मान्यताको अनौचित्य** (२०३९ बैशाख सङ्क्रान्ति) संशोधन-मण्डल ।

'द गोपालराज वंशावली सरसर्ती हेर्दा', **पूर्णिमा** अङ्क ७२ ।

पन्त, महेशराज र दिनेशराज पन्त । 'हाम्रा असफल पिता', **कान्तिपुर दैनिक**, २०५९ कार्तिक ३० ।

पराजुली, बुद्धिसागर, **बृहत् सूचीपत्र भाग १** (ज्योतिष), प्राक्कथन, २०१७ ।

पाण्डे, त्रोत्रराज र नयराज पन्त । **नेपालको संक्षिप्त इतिहास** (प्रवेशिका परीक्षाको निमित्त) । काशी, २००४ ।

**पूर्णिमा** अङ्क ३२ (पृ. २५०-२६५); ५८ (पृ. १-२९); ६२ (पृ. ११-२३); ६४ (पृ.३९-४६); ७२ (पृ.१-६५) र ९२ (पृ. ५२-५५) ।

**पूर्णिमा** अङ्क २७ : (२०२९ आश्विन) बाबुराम आचार्य विशेषाङ्क ।

**रोलम्बा**, वर्ष १०, अङ्क १, (जनवरी-मार्च १९९०) । पृ.३४ ।

लम्साल, देवीप्रसाद, 'सुमतितन्त्र' **प्राचीन नेपाल**, वर्ष १, अङ्क १ । पृष्ठ ५-१० ।

वज्राचार्य, धनवज्र आदि सम्पादक । **इतिहास-संशोधनको प्रमाण-प्रमेय** (पहिलो भाग) । ललितपुर: जगदम्बा प्रकाशन, २०१९ मंसिर ।

**सुमतितन्त्र** । राष्ट्रिय अभिलेखालय, लगत च. ५७ ज्यौतिष ७२; ल्न:एए च्भर्भा ल्य। द्दण्रद्दघ ताडपत्र २८.५ ह ५.से.मी.।

**सुमति सिद्धान्त** । केशर पुस्तकालय (नं. ८२.); NGMPP Reel No. C 106/6

**सौश्रुतिसंहिता सहोत्तारतन्त्र,** केशर पुस्तकालय (नं. ६९९); NGMPP No C.80/7

**हरिवंशम्** राष्ट्रिय अभिलेखालय । लगत चतुर्थ ११५६ विषय ७७६; NGMPP Reel No. E/6959/E 338/8 र 339/1

Bendall, Cecil. *Catalogue of the Sanskrit Manuscripts in the British Museum*. London, 1902.

Bsod nams rtse mo. *The Complete Works 15 Vols.* Vol Na (folio 315a line 1 to 316a line 4). Tokyo: Toyo Bunko, 1968.

Bu-ston. *Chos kyi' 'byung: The History of Buddhism in India and Tibet.* Translated from Tibetan by E. Obermiller, Heidelberg, 1931-32. Reprinted, Delhi: Sri Satguru Publications, 1986. p. 106.

Cunningham, Alexander. *The Ancient Geography of India.* London : Trubner, 1871/1924 Appendix 149-154.

Dani, Ahmed Hasan. *Indian Paleography.* Oxford: the University Press, 1963.

Dikshit, S.B. "The Original Surya Siddhanta." *The Indian Antiquary* XIX (1890.) pp.45-54.

Indraji, Bhagwanlal. "Twenty-three Inscriptions from Nepal." *The Indian Antiquary* Vol IX (1880). pp. 133-194.

"Some Considerations on the History of Nepal." *The Indian Antiquary.* Vol XIII (1884), pp. 411-428.

Jacobi, Hermann. "The Computation of Hindu Dates in Inscriptions etc." John Faithful Fleet, Editor, *Epigraphia Indica* Vol I (1892), pp. 403-407.

Jaiswal, Kashi Prasad, "Chronology and History of Nepal, 600 B.C. -880 A.D." *Journal of the Bihar and Orissa Research Society* Vol XXII (1936), pp. 157-264. Reprinted by Bharati Prakashan. 1976.

Ketkar, Venkatesh Bapuji, 1923. *Indian and Foreign Chronology with Theory, Practice and Tables, 3102 B.C. to 2100 A.D.* Bombay: The Royal Asiatic Society.

Kielhorn , Franz. "The Epoch of Newar Era." *The Indian Antiquary* (September 1888) Vol. XVII, pp. 246-253.

"Examination of Questions Connected with the Vikram era." (January 1890), pp. 20-40);: (June 1890), pp. 166-187; (November 1890), pp. 354-374.

Lassen, Christain. *Indische Alterthumskunde* . Vols. 4, Leipzig, 1847-1861.

Law, B.C. *Geographical Essays.* London: Luzac & Co, 1937.

Levi, Sylvain. "Note Sur la Chronologie du Nepal." *Journal Asiatique* Vol II (July-August, 1894), pp. 55-72.

*Le Nepal: Eetude historique d'un royaume Hindou.* Vols I-III . (1905-1908) Paris: Ernest Leroux.

Majumdar, Ramesh Chandra,. "The Chronology of the Early Kings of Nepal." *B.C. Law Volume I* (1945). Calcutta: The Indian Research Institute, pp. 47-52.

Neugebauer, Otto and David Pingree. *The Pancasiddhantika of Varahamihira Part I.* Copenhagen: Munksgaard, 1970.

Pant, Mahes Raj. *Inept Specimen* ? Kathmandu, 1984, April 22.

Petech, Luciano. "The Chronology of the Early Inscriptions of Nepal." *East and West* Vol. XII, No. 4 (December, 1961), pp. 227-232.

Pillai, L.D. Swmikannu. *Indian Chronology: A Practical Guide to the Verification of Indian Time Records B.C. 1-A.D. 2000.* Madras: the Government Press, 1911/Reprinted by Asian Education Series, 1982/1989.

*An Indian Ephemeris Vol I Part I General Principles and Tables*. Madras: the Government Press, 1922.

Pingree, David. "Precession and Trepidation in Indian Astronomy before A.D. 1200." *Journal for the History of Astronomy* Vol 3 (1972), pp. 27-35.

"History of Mathematical Astronomy in India."*Dictionary of Scientific Biography* Vol XV. New York, 1978, pp. 533-633.

"A Note on the Calendars Used in Early Indian Inscriptions." *Journal of the American Oriental Society* Vol 102 (1982), pp. 355-359.

Sewell, Robert and Shankar Balkrishna Dikshit, *The Indian Calendar.* London, 1896.

Sewell, Robert. *The Siddhantas and the Indian Calendar*. London: George Allen & Unwin, 1924.

Shukla, Kripa Shankar. Editor. *Shankaranarayan's Vivarana on the Laghubhaskariya of Bhaskara I.* Sanskrit Text with English translation. Luknow, 1963. also in Trivandrum Sanskrit Series No 163, 1949.

Sircar, D.C. *Indian Epigraphy.* Delhi : Motilal Banarsidas, 1965.

*Sumati-tantra.* OR 3564 in Bendall's Catalogue (1902), pp. 193-194.

*Tarkajvala* by Bhavaviveka (ca. A.D. 450) Toh= No 3856. Translated into Tibetan by Atisha and Jayashila (Nag lo tsa va)

Tsum-pa khang -po. *dPag bsam ljon bzang.* edited by Sarat Chandra Das. Calcutta : Presidency Jail Press, 1908.



# लिच्छवि राजाहरुको-कालक्रम

| | | |
|---|---|---|
| जयवर्मा/जयदेव | १०७ | गत/वर्तमान शक |
| (१२ राजा) | | |
| वृषदेव | माघवर्षे ९३ | (सन् ३१८ ?) |
| शङ्करदेव | | |
| धर्मदेव | | |
| मानदेव | ३८६-४२७ | (सन् ४६२-५०३) |
| महीदेव | | |
| वसन्तदेव | ४२८-४५४ | |
| वामदनेव | ४६० | |
| रामदेव | ४६७ | |
| गणदेव | ४८२-४८७ | |
| गणदेव/गङ्गादेव (?) | ४८९ | |
| शिवदेव प्रथम | ५१२-५२६/५३५ | |
| अंशुवर्मा | २९-५३६-४४ | संक्षिप्त वर्तमान शक संवत् |
| उदयदेव | ४५ | |
| धुवदेव-जिष्णुगुप्त | ४८-४९ | |
| भीमार्जुनदेव-जिष्णुगुप्त | ५५-५७ | |
| भीमार्जुनदेव-विष्णुगुप्त | ६४-६५ | |
| नरेन्द्रदेव | ६७-१०३ | |
| शिवदेव द्वितीय | ११८-१२९ | |
| जयदेव द्वितीय | १३७-१५७ | |
| मानदेव द्वितीय | १८० | |
| बलीराज | २५० | |
| बलदेव | २७१ | |
| मानदेव तृतीय | ३०१ | (सन् ८७८) |

**स्रोत:** धनवज्र वज्राचार्य, सम्पादक **लिच्छविकालका अभिलेख** (कीर्तिपुर : नेपाल एशियाली अध्ययन संस्थान, २०३०) तथा हालसम्म प्राप्त अन्य १७ वटा लिच्छवि अभिलेख ।

नेपालसंवत् १११७, बुद्धजयन्ति
Thursday, April 22, 1997
Revised मकर संक्रान्ति, २०६१

## डा. कमलप्रकाश मल्ल

जन्म : सन् १९३६ नोभेम्वर १३

शिक्षा : वि.ए. (पटना, १९५७), वि.ए. अनर्स, प्रथम श्रेणी (१९६५, लीड्स), अंग्रेजी भाषा-साहित्य संयुक्तराज्य, पि.एचडी. (भाषाविज्ञान, १९७४, एडिनवरा)

प्राध्यापन : सन् १९५९-६२ पद्मकन्या कलेज, काठमाडौं
सन् १९६२-७० अंग्रेजी विभाग, कीर्तिपुर
सन् १९७०-७५ रीडर, अंग्रेजी शिक्षण समिति, कीर्तिपुर
सन् १९७५-९९ प्रोफेसर, अंग्रेजी शिक्षण समिति, कीर्तिपुर
सन् १९७७-७९ रेक्टर, त्रिभुवन विश्वविद्यालय
सन् १९७९-९९ केन्द्रीय अंग्रेजी शिक्षण विभाग, कीर्तिपुर
सन् १९९६-९९ केन्द्रीय भाषाविज्ञान विभाग, कीर्तिपुर

सम्पादन : *Tribhuvan University Journal (1967-70)*
*Contributions to Nepalese Studies (1984-90)*
*Kailash (1995--)*

प्रकाशन : *Fugitive Essays* (1967)
*Nepal in Perspective* (1973) (with Pashupati Shumshere J.B.R.
*Nepal : A Conspectus* (1977a)
*English in Nepalese Education* (1977b)
*Occasional Papers in the Humanities and the Social Sciences* (1978)
*The Road to Nowhere* (1979)
*Classical Newari Literature : A Sketch* (1982)
*Impleccable Historiography in Nepal : A Rebuttal* (1984)
*The Gopalrajvamsavali:A Facsimile Edition* (with Dhanavajra Vajracharya 1985a)
*The Newari Language : A Working Outline* (1985b)
*Nepal : Perspectives on Continuty and Change* (1989)
*A Dictionary of Classical Newari (2000), Chief Editor*

Visiting Scholar : Department of Linguistics, The University of California, Berkeley, (1980-81)
Visiting Professor : Scandinavian Institute for Asian Studies, Copenhagen, Denmark (1985)

Founding President, The Lingustic Society of Nepal (1980-83)
Life Member: The Literary Association of Nepal